# सवारीको रुल

## साबिक १९८७ सालमा जारी भएको
## खारेज भै त्यसको बदलामा भएको-

१ नं.।। ।। नेपाल राज्यभित्र मोटरकार बस लरी साइकल सनसाइन बग्गी टाँगा टमटम इत्यादि सवारी देहायबमोजिम गरी सरकारिया अड्डामा लगत दर्ता गराई नम्बर राखी रखाई चलाउनुपर्छ लगत दर्ता नगरी नम्बर नराखी त्यसै चलाउन र चलाउन दिनसमेत हुँदैन -----------------------------------------------------------

मोटरकार बस लरी मोटरसाइकल बगी नेपाल ४ भन्ज्याङभित्र आफ्ना कामको निमित्त राखी चलाउन वा बिक्री गर्नानिमित्त देशबाट झिकाउन र नेपाल ४ भन्ज्याङबाहिरमा रहेको नेपाल ४ भन्ज्याङभित्र ल्याउनलाई झिकाउन ल्याउन हुन्छ भन्ने मुखत्यारको इजाजत लिई मात्र झिकाउन ल्याउन हुन्छ विनाइजाजतले त्यसै झिकाउन ल्याउन हुँदैन -------------------------------- १

१ दफामा लेखिएबाहेक अरु सनसाइन साइकल टांगा टमटम रिक्सा नेपाल ४ भंज्याङभित्र झिकाउन राख्नालाई र नेपाल ४ भन्याङबाहिर मोटरकार बस लरी मोटर साइकल सनसाइन बग्गी टाँगा टमटम रिक्सा राख्न देशबाट झिकाउनालाई इजाजत लिइरहनु पर्दैन ८ दफाले लगत राख्नुपर्ने जतिको लगत दर्ता गराई नम्बर राखी चलाउन हुन्छ ------------------------------------- २

इजाजत लिई यसअघि नेपाल ४ भन्याङभित्र लगत दर्ता गराई चलाई आएकोले सो लगत दर्ता गराई राखेका जति मोटरकार बस लरी मोटरसाइकल बग्गी राख्नलाई इजाजत नभए पनि राख्न चलाउन हुन्छ -------------------------- ३

अब उप्रान्त इजाजत लिई नेपाल ४ भन्याङभित्र झिकाए ल्याएको र यस अघि लगत दर्ता भै रहेको मोटरकार अब उप्रान्त अरुलाई लिनु दिनुपर्दा राख्न चलाउन इजाजत पाएकालाई मात्र दिनु र लिनेले पनि लिन हुन्छ इजाजत नपाएकाले इजाजतविना त्यसै राखी चलाउन र चलाउन दिनसमेत हुँदैन ------ ४

मोटरकार राख्नलाई इजाजत पाएका धनीबाट राख्न इजाजत नपाएका अरुले दान बक्स पाएमा राख्ने इजाजत नभै त्यसै चलाउन र चलाउन दिनसमेत हुँदैन -------- ५

नेपाल ४ भन्याङभित्र ४ दफाबमोजिम इजाजत गराई राख्नुपर्ने मोटरकारबाहेक अरु झिकाए राखेका बस लरी मोटरसाइकल बग्गी इजाजत नपाएकालाई पनि त्यसै दिन र लिनेले लिन पनि हुन्छ दिन लिनलाई इजाजत लिई रहनु पर्दैन -- ६

इजाजत लिई झिकाउन राख्नुपर्ने सवारी झिकाउन राख्नलाई इजाजत माग्ने सदर पुलिस गोस्वाराका तालुकवालाछेउ जाहेर गर्न आएमा इजाजत दिन लायक नदेखिए इजाजत पाउन सक्दैन भनी सुनाई पठाइदिनू इजाजत दिन लाएक देखिए मुखत्यारछेउ जाहेर गरी दिनू भन्ने भएकालाई यो किसिमको यो यति झिकाउन राख्न हुन्छ भनी इजाजत माग्नेलाई तालुकवालाको छाप लगाई इजाजत दिनू ------------ ७

इजाजत लिईमात्र झिकाउन राख्न लिन दिन पाउने र इजाजत नलिई त्यसै झिकाउन राख्न लिन दिन पाउने नेपाल ४ भंज्याङभित्र राखी चलाउने मोटरकार बस लरी मोटरसाइकल सनसाइन बग्गी टाँगा टमटम रिक्सा गाडाहरु र नेपाल ४ भंज्याङबाहिर मधेस पहाडमा राखी चलाउने मोटरकार बस लरी मोटरसाइकल बग्गी टाँगा टमटम गाडा लगत दर्ता गराई राखन चलाउन पर्छ नेपाल ४ भञ्याङ बाहिर मधेश पहाडमा सनसाइन रिक्साको लगत दर्ता गर्नु गराउनु पर्दैन त्यसै राखी चलाउनहुन्छ --------------------- ८

लगत दर्ता गराउनुपर्ने ८ दफामा लेखिएका सवारीहरु सदर नेपाल ४ भंज्याङभित्र राख्नुपर्नेले सदर पुलिस गोस्वारामा र बाहिर मधेश पहाडमा राख्नुपर्नेले इलाका गौंडा गढीमा लगत दर्ता गराई नम्बर राखी मात्र चलाउनुपर्छ लगत दर्ता नगराई दर्तानम्बर सवारीमा नराखी चलाउन र चलाउन दिनसमेत हुँदैन --------------------------- ९

देशबाट वा अरु ठाउँबाट ल्याएको लगत दर्ता गर्नुपर्ने सवारी दाखिल भएका १५ दिनभित्र लगत दर्ता गर्ने अड्डामा र दर्ता भै रहेका सवारी अरूलाई दिंदा लिंदा लिए दिएका मितिले १५ दिनभित्र लगत रहेका अड्डामा गै आफ्ना नाउँमा दर्ता गराउनू टांगा टमटमका हकमा ११ दफा बमोजिम हुन्छ -------------- १०

अबदेखि नेपाल ४ भंज्याङभित्र रिक्सा गाडा मधेश पहाडमा बग्गी टाँगा टमटम गाडाहरू राखी चलाउनलाई लगत दर्ता गरी नम्बर राखी चलाउनुपर्ने भएको हुनाले लगत राखी नम्बर चढाउन आउनू भनी इश्तिहार जारी गरी दी इश्तिहार जारी नहुँदै अघि राखी चलाई वा भाडामा राखी चलाउन लगाइआएकोले इश्तिहार जारी भएका मितिले ३५ दिन भित्र र इश्तिहार जारी भएपछि राखी चलाउने र भाडामा राखी चलाउन लाउनेहरुले चलाउनलाई लगत दर्ता गरी नम्बर राखीमात्र चलाउन र चलाउन दिनुपर्छ लगत दर्ता नगरी नम्बर नराखी चलाउन र चलाउन दिन हुँदैन --- ११

झिकाउन ल्याउन राख्नलाई इजाजत लिनुपर्नेमा इजाजत माग्न र दर्ता गर्नु पर्ने सवारी पैल्हे दर्ता गराइमाग्नलाई जाहेरी दर्खास्त दिनुपर्दा झिकाउँन ल्याउन राख्नुपर्ने सवारीको जात किसिम बनाउने कम्पनीको नाउँ नम्बर मोडिल सिलेन्डर नाम खुल्ने देखिनेमा सोसमेत र लगत दर्ता भै रहेको अरुलाई दिए लिएकोमा यस किसिमको यति नम्बरमा दर्ता भएको भनी खोली इजाजत दिने लगत दर्ता गर्ने अड्डामा दिनुपर्छ ------------------------------------- १२

राखन झिकाउन इजाजत लिन लगत दर्ता गर्नुपर्नेको अड्डामा लगत दर्ता अथवा नाउँसारी गराइमाग्न जाहेरी दर्खास्त दिनुपर्ने कुनै कुरामा जाहेरी दर्खास्त दिनलाई आफू हाजिर हुन आउनू सक्नेले आफै हाजिर भै र आफू हाजिर हुन नसकनेले फलानालाई वारीस गरी पठाएको छ मेरो सहिछाप गर्नुपर्ने कलममा निजको सहिछाप गराउनू त्यसमा मेरो मंजूर छ भनी दर्खास्त लेखी सहिछाप गरी पठाउनू लेखिएबमोजिम सहिछाप गरी पठाएमा अड्डाले पनि जाहेरी दर्खास्तको पीठमा वा फड्केमा सो दर्खास्त लिई आउनेको मैले लिई आएको

हुँ भनी लेखी सहिछाप गराई लिई दर्खास्त दिनेको सहिछाप गर्नुपर्ने ठाउँमा फलानाको मानिस फलानाले सहिछाप गरेको भनी लेखी दर्खास्त लिई आउने वारीसवालाकै सहिछाप गराई लिने गर्नू ------ १३

सवारी दर्ता गराउन वा दर्ता भएको अरुलाई लिए दिएको जनाइ माग्नलाई आएमा पैल्हा दर्ता गराइमाग्न आएको भए दर्ता गराइमाग्नेको मात्र र दर्ता भै रहेको लिनु दिनु गरेकोमा लिने दिनेको लगत कितापमा १३ दफा बमोजिम सहिछाप गराई राख्ने गर्नुपर्छ -------------------------------------------- १४

झिकाई ल्याउन राख्नलाई इजाजत लिनुपर्नेमा झिकाउन राखनलाई इजाजत वा सरकारी अड्डाका लगत कितापमा दर्ता गराई राखनुपर्नेमा दर्ता गरी दिदा इजाजत दिने लगत दर्ता गर्ने अड्डाले इजाजत पाएको र दर्ता भए दस्तूर असूल भएको इजाजत पाउने दर्ता गराइमाग्नेलाई निस्सा पुर्जी गरीदिनुपर्छ सो निस्सा पुर्जी गरीदिदा १२ दफाबमोजिम सवारीको जात किसिमसमेत खोल्नुपर्ने खोली यो यति सवारी राख्नु लिनु झिकाउनु लिनु दिनु हुन्छ झिकाउँदा राख्दा लिनु दिनुपर्दा रूलबमोजिम गर्नू रूलविरुद्ध काम गर्न हुँदैन नम्बर राखनुपर्नेमा यो नम्बर यस ठाउँमा १७ दफाबमोजिम राखी चलाउने गर्नू रोड्सेस लाग्ने ठाउँमा चलाउनेमा रोड्सेस लिने अड्डामा पनि ३ दिनभित्र लगत दर्ता गराउन जानू भनीसमेत लेखी दिई रोड्सेस लिने अड्डालाई पनि तुरुन्त जनाउ पठाईदिनू ---------------------------------------------------------- १५

दर्ता गर्न ल्याएका सवारीहरु दर्ता गरी नम्बर तोकिदिंदा देहायका सवारीको देहायबमोजिमको दस्तूर लाग्छ लिई दर्ता गरिदिनू ------------------------- १६

पैल्हे नयाँ दर्ता गराउन ल्याएकोमा ---------------------------------------- १

लरीको रु. ------------------------------------------------------------ २०

बसको रु. ------------------------------------------------------------ १५

मोटरकारको रु. ----------------------------------------------------- १०

मोटरसाइकलको रु. ---------------------------------------------------- ५

सनसाइनको रु. ------------------------------------------------------- २

बग्गी टांगा टमटमको रु. ---------------------------------------------- १

रिक्सा गाडाको रु. --------------------------------------------------- ।

लगत दर्ता भै रहेको सवारी लिए दिएको नाउँसारी दर्ता गराउन लगत कसाइमाग्न आएमा ------------------------------------------------- २

मोटरकार बस लरी मोटरसाइकलको फी. सवारी रु. -------------------------- १

सनसाइन बग्गी टाँगा टमटम रिक्सा गाडाहरुको फी. सवारी पैल्हे लगत दर्ता गर्दा लाग्ने दस्तूरको ४ खण्डको १ खण्ड -------------------------------------------

अघि लगत दर्ता भै रहेको र अब उप्रान्त दर्ता गराउन ल्याए दर्ता भएको मोटरकार बस लरी मोटरसाइकल सनसाइन बग्गी टाँगा टमटम रिक्सा गाडाहरुमा देहायमा लेखिएबमोजिम नम्बर राख्ने र राख्न लाउनुपर्छ --------- १७

नम्बर राख्दा कालो भुइमा सेतो अङ्क अक्षर वा रातो भुइमा सेतो अङ्क अक्षरबाट लगत चढाउने अड्डाले दिएका नमूनाबमजोजिमको नम्बर राख्ने गर्नुपर्छ मनपरी ढाँचाको रङ्ग अक्षरबाट नम्बर राख्न र राख्न लाउन हुँदैन ------------------- १

नम्बर राख्दा लगत दर्ता गरी नम्बर राख्न दिने अड्डाका हाकिमले बाहिरपट्टि सबैले देख्ने मुकर्रर गरिदिएका ठाउँमा तोकिदिएका नम्बर राख्ने रखाउने गर्नुपर्छ त्यसै मनपरेका ठाउँमा राख्न हुँदैन --------------------------------- २

नम्बर राख्दा टाढाबाट हेर्दा पनि हरबखत प्रष्ट बुझ्ने चिन्हे गरी देहायबमोजिमका नापको राम्रो अङ्क अक्षर राख्ने रखाउने गर्नुपर्छ सानु नराम्रो अङ्क अक्षरको र आफ्नू मनपरी राख्न हुँदैन ------------------------------- ३

## मोटरकार बस लरी बग्गीहरूमा

हरएक अक्षर अङ्कको लाम्चोमा ३ $^{१}/_{२}$ इन्ची मोटाइमा $^{१}/_{२}$ इन्चीको र हरएक अक्षर अङ्क २ $^{१}/_{२}$ इन्ची ठाउँ ढाकेको हुनुपर्छ ------------------------------ १

हरएक अक्षर अङ्क आधा इन्च फरकमा हुनुपर्छ -------------------------------- २

अङ्क अक्षरको तल माथि आधा इन्ची र दायाँ बायाँमा १ इन्ची छाडेको हुनुपर्छ ----३

**मोटरसाइकल सनसाइन बग्गी टाँगा**

**टमटम रिक्सा गाडाहरुसमेतमा-**

अङ्क अक्षरको लामचोमा १$^{३}/_{४}$ इन्ची मोटाइमा $^{१}/_{४}$ इन्ची हरएक अक्षर $^{१}/_{४}$ इन्ची ठाउँ ढाकेको हुनुपर्छ ------------------------------------------------ ४

हरएक अङ्क अक्षर $^{१}/_{४}$ इन्च फरकमा हुनुपर्छ --------------------------------- ५

अङ्क अक्षरको तल माथि $^{१}/_{४}$ इन्ची र दायाँ बायाँ $^{१}/_{2}$ इन्ची ठाउँ ढाकेको हुनुपर्छ ------------------------------------------------------------------ ६

नम्बर राख्दा मोटर बस लरी मोटरसाइकलमा अगाडि पछाडिसमेत २ ठाउँमा सनसाइन बग्गी टाँगा टमटम रिक्सा गाडाहरुमा पछाडि १ ठाउँमा राख्ने गर्नुपर्छ --- ४

नम्बर राख्नुपर्ने सवारीमा नम्बर राख्दा अड्डाबाट तोकिएका दर्ता नम्बर देवनागरी अङ्क अक्षरबाट राख्नुपर्छ फरक पारी अड्डाबाट तोकिनदिएका झुट्टा नम्बर राखनसमेत हुँदैन ------------------------------------------------ ५

नम्बरको अङ्क लेखिएका रङ्ग मैलो भै वा रङ्ग उडेको वा उप्किएको भै नबुझिने जस्तो हुन गए नबुझिने जस्तो देखिनासाथ अघिको जस्तो फेरि रङ्ग चढाई हरबखत अङ्क अक्षर प्रष्ट बुझिने गरी राख्नु र रखाउने गर्नुपर्छ ------------- ६

लगत दर्ता भएको सवारीमा दर्ता नम्बर राख्दा लगत दर्ता गर्ने अड्डैमा नम्बर लेखी तयार गराई राखेको प्लेट तयार गरी राखी दर्ता भएकै दिन सो नम्बर लेखिएको प्लेटको मोल सवारीको धनीबाट लिई अड्डाबाटै नम्बर राखन दिने र नम्बर लेखिएको प्लेट अड्डामा मौजदात नभएको बखत नमूना देखाई यस नमूना नापबमोजिमको यो नम्बर आफ्नैतर्फबाट बनाई तयार गरी यस अड्डामा

जँचाई पास गराई दिएको नम्बर यस ठाउँमा राख्ने गर्नू भनी सुनाई लेखिएबमजोजिम गर्नु गर्न लाउनू -------------- ७

लगत दर्ता गरी नम्बर राख्नुपर्नेमा लगत दर्ता गर्ने अड्डामा दर्ता गराइ माग्नका निमित्त ल्याउँदा लैजाँदाबाहेक अघिपछि दर्ता नम्बर नराखी वा झुट्टा नम्बर राखी त्यसै चलाउन हुँदैन ----------------------------------------------- ८

---

सरकारिया अड्डामा दर्ता गराई नम्बर राखी चलाउनुपर्ने सवारीहरुमा दर्ता गर्ने अड्डाले नम्बर राख्दा मोटरको १ बसको १ लरीको १ मोटरसाइकलको १ सनसाइनको १ बग्गीको १ टाँगाको १ टमटमको १ रिक्साको १ गाडाको १ लगत लगतकिताप छुट्टा छुटै खडा गरी लगतपीछे सिलसिलेवार नम्बर छुट्टा छुट्टै राख्ने गरी सो नम्बर सवारीमा पनि राख्न लगाउनुपर्छ ------------------ १८

भाडामा रहेको मोटरकार बस लरी देहायबमोजिम नराखी चलाउन हुँदैन ------ १९

सवारी भाडामा राखी चलाउने भएमा भाडामा रहेको भन्ने थाहा पाउने गर्नालाई अड्डामा रहेको लगत कितापमा भाडामा रहेको भनी जनाई सो भाडामा रहने सवारीमा भाडा भन्ने अक्षर टाढाबाट हेर्दा पनि प्रष्ट बुझ्ने देखिने गरी १७ दफाबमोजिमको लगत दर्ता गर्ने अड्डाबाट तोकिदिएका सबैले देख्ने ठाउँमा नमूनाबमोजिमको भाडा भन्ने अक्षर लेखी सवारीमा राख्नु राख्न लाउनु नबुझ्ने हुन गएमा १७ को ६ दफाबमोजिम हरबखत प्रष्ट बुझ्ने गरी राख्नुपर्छ ------ १

भाडामा मानिस राखी वा माल लादी चलाउँदा भाडा लिंदा मोटरकारमा यति बसमा यति लरीमा यति जवान वा माल यति वजनसम्म अथवा माल मानिस दुवै राखी चलाउँदा बस लरीका वजनसम्म मात्र राखी चलाउँनु भाडा लिदा पनि यस दरले लिनु भनी सदरमा भए पुलिस गोस्वाराका तालुकवाला जिल्लामा भए जिल्ला गौंडा गोस्वाराका बडाहाकिमबाट तोकाई लिई सो तोकिदिएबमोजिम सवारीको लगत दर्ता गर्ने अड्डाले यति जवानसम्म वा यति वजनसम्म राखी चलाउनु भाडा लिंदा पनि यस यस ठाउँमा लादा ल्याउँदा यस दरले लिनू लेखिए भन्दा बढी राख्नु वा बढी भाडा लिई चलाउन हुँदैन भन्ने

लेखी अड्डाको र हाकिमको समेत छाप लगाई सवारीमा सबैले देख्ने गरी टाँसी दिने टँसाई लिने गर्नु पर्छ -------------------------------- २

भाडामा रहेको मोटर कार बस लरीमा लगत राख्ने अड्डाबाट चलाउन लायक हो होइन भनी हरसाल ६ दफामा लेखिएका टायम टायममा जँचाई चलाउन लायक देखिए फलाना दिन जाँच भयो भनी जाँच्नेको सहिछाप गराई मोटर हाँक्ने मानिस बस्ने सीट अगाडि रहेको ऐनामा टाँसी राख्ने गर्नू -------------- ३

भाडामा रहेको मोटर कार बस लरीमा जाँचेको र यति जवान यति वजनसम्म राखी यस दरले भाडा लिनू भनी मोटरमा टाँसिएको कागज उप्की गए च्यातिए झुत्रो भए नेपाल ४ भन्ज्याङभित्र भए चारपैसा दस्तूर तिरी अर्को जाँचेको भनी छापिएको छापा कागज र जिल्लाकोमा भए दस्तूर तिरी अर्को लेखाई टँसाउने गर्नू ---------------- ४

भाडामा जान बसेका ड्राइभरले मुनासिब कारण नपरी भाडामा जान्न भन्न पाउँदैन ---- ५

सवारीहरु चलाउँदा बिग्रेको चलाउन र चलाउन दिन हुँदैन भाडामा रहेको मोटर बस लरी ३ दफाबमोजिम सालको ४ पटक ३।३ मैन्हा मा र अरू भाडामा नरहेको प्राइभेटी सवारी वर्षको १ पटक लगत राख्ने अड्डाबाट जाँच्नेलाई लगाई जँचाई निस्सा लिने दिने गर्नुपर्छ प्राइभेट सवारीमा जाँचेको निस्सा सवारीमा टाँस्नुपर्दैन --------- ६

देशबाट झिकाई आएका मोटरकार बस लरीमा यहाँ बढी अर्थात् ड्राइभर बस्ने ठाउँ खण्ड बनाउँदा देशबाट बनी आएका नापबमोजिमको मात्र बनाउनुपर्छ सवारी हाँक्ने मानिस बस्नेका दाहिनातर्फ कुनै अर्को मानिस वा बस्न राख्न हुने गरी बढाई बनाउनु र सवारी हाँक्नेका दाहिने तर्फ अरू कुनै मानिस वस्तु राखी चलाउन हुँदैन ------२०

बस लरीमा काठको घर बनाउँदा सो बस लरीको स्यासीको देशबाट जडान गरेको नापभन्दा १ फुटसम्म बढाई बनाए पनि हुन्छ त्यसदेखि बढी बढाई काठको घर बनाउन हुँदैन -------------------------------------------- २१

मोटरकार बस लरी मोटरसाइकल बग्गी टाँगा टमटमहरुको लगत राख्ने अड्डाले लगत चढाइसकेपछि रोड्शेष लागी आएका ठाउँमा रोड्शेष लाग्ने सवारीको रोड्शेष लिने अड्डामालगत दर्ता भएको ३ दिनभित्र दर्ता गर्न जानू भनी सवारी दर्ता गरिमाग्ने धनीलाई सुनाई निस्सा लिई आफ्ना अड्डाको लगत कितापमा समेत फलाना मितिमा जनाउ गयो भनी जनाई नम्बर राखिदिएका मितिले ३ दिनभित्रै रोड् ट्याक्सी लिने अड्डामा जनाउ पठाउने र लगत दर्ता गराइमाग्ने धनीले पनि म्यादभित्र रोड्शेष असूल गर्ने अड्डामा दर्ता गर्न जानुपर्छ लेखिएबमोजिम जनाउ र लगत दर्ता गर्नलाई आउनासाथ रोड् ट्याक्सी असूल गरी लिने अड्डाले आफ्ना अड्डाको रोड्शेष असूल गर्ने लगतमा यो नम्बरको यसले राखेको यस यसको रोड् ट्याक्सी असूल गर्नुपर्ने भनी लगत कसी सवाल सनदबमोजिम गर्नू ------------------------------------------- २२

रोडशेष लिने लगतमा दर्ता भए दर्ता गराई राखेको पछि अरुलाई बिक्री गरे वा अरु कुनै किसिमसँग हक छाडी लिनु दिनु वा चलाउन नहुने भै लगत कटाउन आएमा लगतमा नाउँसारी भए लगत काटिसकेपछि सो नाउँसारी भए लगत काटिएको २२ दफाबमोजिम लगतमा जनाउने अड्डाले रोडशेष लिने अड्डालाई पनि लगतमा लगत काटिएको मितिले ३ दिनभित्र जनाउ दिने गर्नू ----------- २३

देशबाट झिकाउन अरु ठाउँबाट ल्याउनलाई इजाजत दिएका जतिको लगतकिताप खडा गरी राखी इजाजत दिएका ३ दिनभित्र फलानालाई यस किसिमको यो यो यति झिकाउनलाई इजाजत दिएकोछ झिकाई ल्याएमा जाँची छाडी जनाउ दिनु भनी इजाजत दिने अड्डाले सरदमा झिकाउनेमा भन्सार गोस्वारालाई जनाउ पठाइदिनू ---- २४

इजाजत ली झिकाउन ल्याउनुपर्ने सवारीहरु देश या अरु ठाउँबाट झिकाई आएकोमा भारी खोली हेर्ने अड्डाले हेरी बुझी विना इजाजतले ल्याएको देखिए ऐनसवालबमोजिम गर्नू गर्न लाउनू इजाजत लिई झिकाए ल्याएको जतिमा ऐनसवालबमोजिम गरी इजाजतबमोजिम ल्याएको जाँची छाडेको जति मैन्हाको

एकै पटक मैन्हा भुक्तान भएका १५ दिनभित्र फलाना फलानाले यस किसिमको यो यो यति झिकाई फलाना मितिमा लगेको छ भन्ने फाँटवारी लगत दर्ता गरी राख्ने अड्डामा पठाइदिनुपर्छ लगत दर्ता गराई राख्ने अड्डाले पनि लेखिएको फाँट नआएमा झिकाई ल्याएको जति लगत दर्ता गराउन आएको छ छैन भनी भिडाई हेरी इजाजत ली झिकाउनेले लगत दर्ता गराइमाग्न म्यादभित्र नआएको देखिएका जतिमा ऐनसवालबमोजिम गर्नू ----------- २५

बिक्री गर्नालाई देश वा कतैबाट झिकाई बिक्री गर्न इजाजत पाएकाले झिकाई आइपुगेका १५ दिनभित्र लगत दर्ता गर्ने अड्डामा झिकाई आएको मोटर बस लरी मोटरसाइकल बग्गीहरु देखाई जँचाई लगतमा दराइ माग्नलाई लगत राख्ने अड्डामा दर्खास्त दिन आएमा जाँची बिक्री गर्नलाई झिकाए जतिको छुट्टै लगतकिताप खडा गरी बिक्री गर्नलाई झिकाउनेको बिक्री भएका राख्न पाउने यस यसलाई यस यस मितिमा यति बिक्री भयो भन्ने स्रेस्तामा लेखी किन्नेको सहिछाप गरी राखी किन्नेलाई पनि फलाना मितिमा दिएको भनी सहीछाप गराई ली मैन्हा मैन्हादिनमा यो यो यति यस यसलाई यस यसदिनमा बिक्री भएकोछ भनी जाहेर गर्न आउँला भन्ने कागज गराई ली झिकाएको सवारी छाडिदिनु लेखिए बमोजिम बिक्री भएको जाहेरी आएमा बिक्री भएको जति अड्डामा रहेका बिक्री गर्नलाई झिकाएको लगतकितापमा जनाई दी खरीद गरी लिनेले राख्नलाई लगत दर्ता गराउन आए नआएको जाँच्ने गर्नुपर्छ किनी लिनेले दर्ता गराउन आएमा नम्बर रहने हुनाले बिक्री गर्नालाई झिकाएमा नम्बर राख्नुपर्दैन ------------------------------------------------------------------ २६

देशबाट झिकाई बिक्री गर्ना निमित्त इजाजत पाई झिकाउनेहरुले अरुलाई दिनुपर्दा इजाजत ली राख्नुपर्ने जति राख्नालाई इजाजत पाएकालाई मात्र दिनुपर्छ राख्न नपाउने र इजाजत नपाएकालाई दिन र लिनेले लिनसमेत हुँदैन --------------- २७

लगत दर्ता भैरहेको सवारी लगतमा दर्ता गराई राख्नेले सवारी राखी चलाउँदा पाउने कसैलाई हक छोडी दिए लिएमा लिने दिनेले लिए दिएका १५ दिनभित्र यस बेहोरा सँग मैले दिएँ लिएँ दर्तावालाका नाउँबाट कट्टा गरी लिनेका नाउँमा दाखिल खारेज गरी पाऊँ भनी लगत रहेका अड्डामा दरखास्त दी नाउँसारी गराई लिनुपर्छ लेखिएबमोजिम नाउँसारी दाखिल खारेज गराउनालाई लिने दिने दुवै हाजिर भए दुवैको सहिछाप गराई र एक जना मात्र वा दुवैजना हाजिर हुन नआई यस हिसावसँग लिए दिएको हुँ नाउँसारी दाखिल खारेज हवस् भनी दर्तावालाले गरी दिएको कागज दी १३ दफाबमोजिम दरखास्त लेखी सहीछाप गरी पठाएमा दरखास्तवालाको सहिछाप गर्नुपर्ने ठाउँमा सो दफाबमोजिम गरी वारीसवालाको सहिछाप गराई ली चलाउन पाउनेले लिए पाएको भए लिनेसँग दफाबमोजिम लाग्ने दस्तूर ली यसले यस हिसावसँग फलाना मितिमा लिए दिएको भनी लगतकितापमा जनाई दिनेलाई अघि दिराखेको निस्सा खिची ली हक छोडी ली दर्ता गराउन आउनेलाई निजका नाउँमा लगत दर्ता भएको निस्सासमेत दिनू लिनू ------------------------------------- २८

लगत दर्ता वा नाउँसारी गराई राख्नुपर्ने सवारी २८ दफाबमोजिमको म्याद १५ दिनभित्र दर्ता गराउन नल्याए म्याद नाघेपछि दर्ता गर्न ल्याएमा अैन बमोजिम जरिवाना गरी दर्ता गरिदिनू ------------------------------------- २९

लगत दर्ता गराई राख्नुपर्ने सवारी दर्ता गराई राख्ने दर्तावाला धनी मरे त्यसको हकदारले मरेका ३५ दिनभित्र लगत रहेका अड्डामा जाहेर गर्नुपर्छ लेखिएबमोजिम जाहेर गरी आफ्ना नाउँमा राख्न आए ७ दफाबमोजिम गर्नू -- ३०

लगतदर्ता भै नम्बर नचढेको मोटरकार बस लरी मोटर साइकल सनसाइन बग्गी रिक्सा टांगा टमटम इत्यादि सवारी विग्री चलाउन नहुने भएमा चलाउन नहुनेभएको हुँदा लगत काटी वा सवारी चलाउने लगत काटी पाऊँ भनी लगत दर्ता गराउने धनीले दर्खास्त दिन आए जँचाई चलाउन नहुने लेखिएको बेहोरा

जनाई लगत काटी लगत दर्ता भएको निस्सा र सवारीमा राखेको नम्बर समेत खिची लिई लगत काटेको जनाई रोड्शेष लिने अड्डामा पनि पठाईदिनुपर्छ --- ३१

मोटरकार बस लरी बग्गीहरू धनीले आफ्ना घरमा राख्दा मोटरहरू ग्यारेजमा र बग्गी टाँगा टमटम बग्गीखानामा राख्ने गर्नुपर्छ बाहिर पब्लिकको सडक बाटोमा सधैंभरी त्यसैराख्ने गर्न हुँदैन ग्यारेज बग्गीखाना भत्के बिग्रेमा भने भत्के बिग्रेका ३५ दिनभित्र मर्मत गरी तयार गरी ग्यारेज बग्गीखानामा राख्नु तयार नभएसम्म वा अघि पछि बाहिर सडक बाटोमा राख्नुपर्ने भै राख्दा पनि मानिसहरू जान आउन र गाई वस्तु सवारीहरू लानलाई बाटो नरोक्ने गरी फराकिलो जग्गामा राख्ने गर्नुपर्छ ------ ३२

२ नं ।। ।। लाइसेन्स ली हाँक्नुपर्ने दमकल मोटरकार बस लरी मोटरसाइकल बग्गी टाँगा टमटम इत्यादि सवारी हाँक्ने काम सिकाउँदा सिक्दा देहायबमोजिम गरी सिक्ने सिकाउने गर्नू ----------------------------------------

सर्टिफिकेट ली हाँक्नुपर्ने काम सिक्दा सिकाउँदा जुन कुरा हाँक्ने काम सिकाउनुपर्ने भएकोछ त्यसकुरा हाँक्नलाई सर्टिफिकेट पाएकासँग सिक्नु र सिकाउनुपर्छ सर्टिफिकेट नपाएकाले सिकाउन र त्यससँग सिकिमाग्न पनि हुँदैन --------------- १

सिकाउँदा सर्टिफिकेट नपाएकालाई पनि कुनै कुराको नोक्सान नहुने गरी रुलबमोजीम हाँक्ने काम सिकाउनुपर्छ ------------------------------------ २

पैल्हे सिकाउँदा मानिसको भीड भएको र टुँडिखेल छाउनीबाहेक अन्त एकलास ठूलो ठाउँमा लगी रुलबमोजिम हाँक्ने काम सिकाई हाँक्ने रूल सबै जानी हाँक्न सक्ने भयो अब अन्यत्र ठाउँमा नोक्सानीको बचाउ गरी होशियारी साथ हाँक्न सक्छ भनी सिकाउनेले ठहराई जिम्मा लिए पछिमात्र ५ दफाबमोजिम अन्यत्र लगी हँकाईहेर्नू -- ३

सिक्नेले हाँक्दा कुनै कुराको नोक्सानी परी सजाय हुने भएमा सिक्नेलाई सजाय हुँदैन सिकाउनेलाई सजाय हुन्छ ----------------------------------------- ४

पैल्हे ३ दफामा लेखिएबमोजिमको एकलास ठाउँमा लगी हँकाई हेरी हाँक्न सक्ने देखिएपछिमात्र शहर गाउँभित्र सडक वस्ती मानिसहरु हिंड्ने ठाउँ र उकालो भिऱ्हालो मोड छेडभएका समेत सबै ठाउँमा हाँक्न लगाई हेर्नुपर्छ ---- ५

सिकिमाग्नेले राम्रो हिसावसँग हाँक्न सक्ने भैसकेपछि सिकाउनेले जाँच दी सर्टिफिकेट लिनुपर्ने जतिमा यसले यो सवारी रुलबमोजिम हाँक्न सक्छ भनी ३ नं. को ४ दफाबमोजिम सिकाउनेले सहीछाप गरी सिकिमाग्नेलाई दिनुपर्छ --- ६

३ नं ।। ।। नेपाल सरहदभित्र मोटरकार बस लरी मोटर साइकल बग्गी टाँगा टमटम हाँकी चलाउना निमित्त सर्टिफिकेट लिनलाई देहायबमोजिम दर्खास्त दिनुपर्छ ---

मोटरकार बस लरी मोटर साइकल बग्गी टाँगा टमटम हाँक्ने काम देशमा सिकी सर्टिफिकेट पास पाई आएकोले नेपाल सरहदमा र नेपाल सरहद मोफसलमा हाँक्नलाई पास पाएकाले सदर नेपाल ४ भञ्याङ्गभित्र हाँक्नेलाई जाँच दिन सर्टिफिकेट लिनलाई दरखास्त दिनुपर्छ -------------------------- १

देशमा सिकी सर्टिफिकेट ली आएकाले र यही नेपाल सरहदमा हाँक्ने काम सिकेकाले हाँक्ने कामको जाँच दिनालाई सदरमा हाँक्नलाई जाँच दिनेले सदर पुलीस गोस्वारामा जिल्लामा हाक्नलाई जाँच दिनेले जिल्ला इलाका गौडा गोस्वारामा दर्खास्त साथ जाँच दिनालाई लाग्ने ५ दफा बमोजिमको दस्तूर समेत दाखिल गर्नुपर्छ ---------------- २

सवारी हाँक्ने जाँच दिनालाई दर्खास्त दिंदा हाँक्ने कामको नोकरी गर्नेले आफै हाजीर भै र हाँक्ने कामको नोकरी नगर्ने भएको मालीक धनीले नै हाँक्नलाई जाँच दिनेमा भए ३ दफा बमोजिम दर्खास्त लेखी सहीछाप गरी अरुका हातमा पठाईदिए पनि हुन्छ जाँच हुने दिन आफै हाजिर भै जाँच दिनु पर्छ ---------- ३

सिक्ने कामको दर्खास्त दिनेले नेपाल सरहदमै सिकेकाले हाँक्ने कामको नेपालको सर्टिफिकेट पाएका फलाना गयो हाँक्ने काम सिकेको छु यस ठाउँमा हाक्नलाई जाँच दिन पाऊँ भनी दर्खास्तमा लेखी सो दर्खास्तका पीठ फड्के

किनारामा वा छुट्टै कागजमा सिकाउनेको म फलानाले यसलाई यो सवारी हाँक्ने काम सिकाएको हुँ जाँच दिन सक्छ भन्ने सही छाप गराई लिनुपर्छ देशको सर्टिफिकेट पाएकाले नेपाल सरहदमा हाँक्नलाई वा नेपाल सरहद जिल्लामा हाँक्नलाई जिल्लाको सर्टिफिकेट पाएकाले सदरमा हाँक्नालाई जाँच दिनुपर्नेमा सो सर्टिफिकेट पाएका कुरा दर्खास्तमा लेखी पाइरहेको सर्टिफिकेटसम्म देखाए पुग्छ सिकाउनेको सहिछाप गराउनुपर्दैन सर्टिफिकेट देखाएकोमा सर्टिफिकेटमा रहेका फोटो चिन्हसमेत मिल्छ मिल्दैन भिडाई हेरी दरखास्तको शिरमा मिले नमिलेको कैफियत लेखी हाकिमले दस्खत गरी राख्ने गर्नू ------------------------------------------------------------------- ४

हाँक्ने कामको जाँच दिनालाई मोटरकार बस लरी मोटरसाइकल हाँक्ने कामको जाँच दिनालाई ६। रु बग्गी टाँगा टमटम हाँक्ने कामको जाँच दिनेमा १ रुपैयाँ दरखास्त साथ दस्तूर दाखिल गरे मात्र जाँच हुन सक्छ दाखिल नगरे दरखास्त लाग्न सक्तैन ---------------------------------------- ५

४ नं ।।     ।। अब उप्रान्त जाँच गर्नुपर्दा र अघि जाँच्नलाई दरखास्त दिएको जाँच दिनुपर्ने बाँकी र जाँच पास भै सर्टिफिकेट दिन बाँकी भएकालाई देहायबमोजिम गरी म्यादभित्र जाँच्ने र जाँच पास भएकालाई सर्टिफिकेट दिने गर्नुपर्छ -------------------------

अघि सवारी हाँक्ने कामको जाँच दिनालाई दरखास्त दिएको जाँच भैनसकेका र जाँच भैसकेका सर्टिफिकेट दिन बाँकी भएकोलाई हाजिर भै जाँच दिन सर्टिफिकेट लिनलाई ३५ दिन भित्र हाजिर हुन आउनू सो म्यादमा हाजिर नभए जाँच हुने सर्टिफिकेट पाउनसमेत सक्तैन भन्ने बेहोराको जाँच गरी सर्टिफिकेट दिने अड्डाले म्याद पुर्जी यो रुल जारी भएका १५ दिनभित्र टाँसिदिनू ---------------------------------------- १

अब उप्रान्त हाँक्ने कामको जाँच दिनालाई दरखास्त दिन आए पठाएमा र अघि दरखास्त परी जाँच्न बाँकी भएका टाँसिएका म्यादमा हाजिर हुन आएकाहरुको हाजिर भएका दिन जाँच गर्न सक्ने भए उसै दिन जाँचिसक्नू ----------------- २

दरर्खास्त दिएको दिन जाँच हुन नसक्ने भए हाँक्ने काम जाँच दिनेलाई जुन दिन जाँच हुन सक्छ उस दिनको तारीख मुकर्रर गरी दी यस दिन जाँच हुन्छ यस ठाउँमा यस टायममा जाँच गर्ने सवारी समेत ली हाजिर हुन आउनू भनी तारीख तोकिदिनू ---- ३

जाँच्नेले हाजिर हुनेको मुनासिव कारणले बाहेक जाँच दिने हाजिर रहेकोमा जाँच गर्नालाई दर्खास्त दिएका मितिले १५ दिनभित्र जाँच गरिसक्नुपर्छ जाँच नगरी तारीखमात्र दी झुलाई राख्न हुँदैन ------------------------------------ ४

म्याद तोकिएका तारीखका दिन ऐन बमोजिमको असक कारण परी हाजिर हुन नसके ३ पटक गरी जम्मा ४५ दिनसम्मको अर्जी लिन पाउँछ अर्जी पठाउँदा यस कारणले तारीखमा हाजिर हुन सकिन फलाना दिन हाजिर हुन आउँछु भनी अर्जी गर्नुपर्छ जाँच हुन नपाउँदै तोकिएका तारीखका दिन हाजिर नहुने अर्जी खबर पनि दाखिल गर्न नसक्नेको तारीख थामिन सक्तैन --------------------- ५

म्याद तारीख गुज्रेको थामी जाँच गराइमाग्नलाई जाँच गर्ने अड्डामा दर्खास्त ३५ दिनभित्र हाजिर भै दिन आएमा जरिवाना नगरी र ३५ दिन नाघेका १५ दिन अर्थात् तारीख गुज्रेका ५० दिनभित्र औ दोस्रा पटकको गुजारेकोमा गुज्रेका मितिले १५ दिनभित्र हाजिर भएमा १ रुपैयाँको लिफा वाला विन्तिपत्र दिए अड्डैबाट र सो नाघेका ३५ दिनभित्र सदरबाट जाँच गर्नेमा सदरपुलीसका तालुकवालाको मोफसलकोमा जिल्ला गौडा गोश्वाराका तालुकवाला बडाहाकिमको तोक प्रमाङ्गी गराई ल्याएमा जाँच दिंदा लाग्ने दस्तूरको आधी दस्तूर जरिवाना गरी म्याद तारीख थामी तारिख तोकी जाँच गर्नू लेखिएको म्याद नाघेपछि गुज्रेका म्याद तारीख थामिन र जाँच गर्न बाँकी भएकाको अघि दिएका दरखास्तबाट जाँच हुनसमेत सक्दैन थाम्ने म्याद नाघेका ३ दिनभित्र

जाँच दिनालाई फेरि अर्को दर्खास्त दिएका बखत जाँच गर्ने भनी लेखिदिई डिसमिस गरिदिनू ------------------------------------------------ ६
जाँच दी जाँच पास भैसकेकाले सर्टिफिकेट लिन नपाउँदै तारीख गुजार्नेले म्यादभित्र तारीख नथमाई म्याद नाघिसकेपछि सर्टिफिकेट लिन आए पनि जाँच भैसकेको सर्टिफिकेट दिनसम्म बाँकी भएको हुनाले जाँच दिदा लाग्ने दस्तूरको आधी दस्तूर जरिवाना गरी सर्टिफिकेट दिनू -------------------------------- ७
तोकिएका म्यादभित्र जाँच नगर्ने जाँचपास भएकालाई म्यादभित्र सर्टिफिकेट नदिने हाकिमलाई अैन छाडी काम गरेसरह जरीवाना हुनेछ ----------------- ८
हाँक्ने काम जाँच गर्दा हाँक्ने कामको जाँच गर्ने अड्डामा जाँच गर्ना निमित्त जागीरदार मुकर्रर भएका ठाउँमा सो मुकर्रर भैरहेकै जागीरदारले र जाँच गर्ने मुकर्रर भएका जागीरदार हाजिर हुन जाँच गर्न नसक्ने भएका बखत वा जँचाउन लाउन नहुने भएमा सदरमा जाँच गर्नालाई सदर पुलिसगोस्वाराका तैनाथवालाले मुकर्रर गरिदिएका सर्टिफिकेट पाईरहेका ड्राइभर सवारले मोफसलमा जाँच गर्नालाई जिल्लाका गौडा गोस्वाराका बडाहाकिमले पास पाएकालाई लगाई जाँच गर्नु गर्न लगाउनुपर्छ ----- ९
मोटरकार हाँक्नालाई सर्टिफिकेट पाएकाले बस लहरी हाँक्न र टाँगा टमटम हाँक्नलाई सर्टिफिकेट पाएकाले बग्गी हाँक्नलाई दर्खास्त दिन आएमा मोटरकार ३ वर्षसम्म हाँकी चलाई आएकाले बस लरी हाँक्न र टाँगा टमटम ३ वर्ष हाँकी चलाएकाले बग्गी  हाँक्ने सर्टिफिकेट दिनलाई जाँच दी ली रहनुपर्दैन त्यसै जाँच नली जुन सवारी हाँक्नलाई पास माँगेको हो त्यस सवारी हाँक्ने पास दिन लाग्ने दस्तूर ली सर्टिफिकेट दिनू ------------------------- १०
जाँच गराउँदा जाँच गर्ने आफैले नै सिकाएको भए सो सिकाउनेबाट र जाँच गर्नेको देहायबमोजिम नाता कारवार झगडा परेका मानिसको भए सो नाता कारवार झगडा परेकालाई जाँच गर्न दिन समेत हुँदैन गरे दिएको भए पनि

बदर हुन्छ लेखिए बाहेक अरूबाट जाँच गर्न लगाउने र सर्टिफिकेट दिन लाउनू ----------------------- ११

आफ्ना एकाघरसंग वसेका जहानको ------------------------------------------१

हाडमा अपुताली परे खान पाउने नातेदारको ----------------------------------- २

आफ्नू मामा, सानो, ठूलो, बाबु, ससुरा, जेठु साला मीत आफ्ना दिदी बहिनी छोरी नातिनी दिएको जुवाई भानिज नातिको ---------------------------- ३

आमाको बाबु मन्त्र सुनाउने गुरु मन्त्र सुनाएको शिष्यको --------------------- ४

आफूले कारवार झगडा भएको ------------------------------------------ ५

आफ्नो नोकर चाकरको ----------------------------------------------- ६

हाँक्ने काम जाँच गर्दा पैल्हे यो रुलको ५।६।७ नं. बमोजिम जाँच गरी हेरी पास भैसकेपछि जुन सवारी हाँक्नालाई पास दिनुपर्ने भएकोछ सो राम्रो हिसाबसंग दस्तूर माफिक होशियारीसंग हाँक्न सक्ने हो होइन भनी २ नं. को ३।५ दफाबमोजिमका ठाउँमा लगी हँकाइ हेरी जाँच गर्ने गर्नू रुलको जाँच पास नभै हाँक्ने कामको जाँच दिन लिन हुँदैन ------------------------------ १२

जाँच गराउँदा हाँक्ने कामको जाँची सर्टिफिकेट दिने अड्डाका हाकिम वा असिष्टेन्ट १ जनाको रोहवरमा जाँच गर्नु गराउनु पर्छ --------------------- - १३

१६ वर्ष मनिकाले र लुलो लङ्गडो वा बैऱ्हो आँखा र हात खुट्टाको जोर कम भएको वौलाहा वा एक पटक बौलाइसकेको छारे रोग भएकोले र एक पटक हात खुट्टामा पक्षवात भएकाले मोटरकार बस लरी मोटर साइकल बग्गीसमेत सवारी हाँक्ने कामको जाँच हुन र सर्टिफिकेटसमेत पाउन सक्दैन नजर ठीक नहुने चस्मा लाउँदा ठीक हुने रहेछ भने चस्मा लगाई जाँच गर्न र चस्मा लगाई हाँक्ने गरी सर्टिफिकेट दिनहुन्छ ----------------------------------- १४

यसै महलका १४ दफाबमोजिम भएको हो होइन भनी छुट्याउनुपर्ने देखिए हस्पतालबाट जाँच गराई हस्पतालको निस्सा ली सोबमोजिम नभएको भए मात्र जाँच गरी सर्टिफिकेट लिने गर्नुपर्छ --------------------------------------- १५

हाँक्ने कामको जाँच गर्नेले जाँच गरी सकेपछि जाँच खतम भएको दिन जाँच्दा हाँक्न सक्ने ठहरी जाँचपास भएकालाई सदरको वा जिल्लाको हाँक्न सक्छ सर्टिफिकेट दिन लायकको छ भनी र हाँक्न नसक्ने देखिए यस कारणले हाँक्ने कामको सर्टिफिकेट दिन लायकको देखिदैन भनी जाँच्नेहरूले सही छाप गरी सो जाँचको कागज जाँच गर्न दिने अड्डामा दिनुपर्छ ---------------------१६

जाँचबाट फेल भएकालाई फेल भएका मितिले ३ मैन्हा नभै फेरि जाँच लिन दिन हुँदैन त्यस पछि अर्को दरखास्त दी जाँच दिनुपर्छ ---------------------- १७

जाँच गरी हेर्नेले जाँच सिध्याई १६ दफाबमोजिम लेखी दिसकेपछि जाँच गराउने अड्डाले जाँच खतम भएकै दिन जाँचबाट ठहरेको बेहोराको कागज लेखाई सहीछाप गराइ ली सो जाँचको कागज लेखिदिएका मितिले मुनासिव कारणले बाहेक ७ दिनभित्र पास भएकालाई ५ नं. को दफाबमोजिम गरी सर्टिफिकेट दिने र फेल भएकालाई जाँच पास नभएकाले पास पाउन र दर्खास्त साथ दाखिल गरेको जाँच दिनलाई दिएको दस्तूर फिर्ता हुन समेत सक्दैन भनी सुनाई निस्सा ली दिनुपर्छ ---- १८

हाँक्ने काम जाँच भै सकेपछि जाँच दिनालाई दर्खास्तसाथ दाखिल भएको दस्तूरमध्येबाट मोटर मोटरसाइकलको जाँच गर्नलाई मुकर्रर भएका जागीरदारबाहेक अरू ड्राइभरले मोटर मोटरसाइकलको जाँच गरेमा जाँच गर्ने ड्राइभरलाई ४ रूपैयाँ बग्गी टाँगा टमटमको जाँच गर्नेलाई १ रूपैयाँ पाउछ दिनू जाँच गर्न मुकर्रर भैरहेका जागीरदारले जाँच गरेको भए त्यसले पाउँदैन सरकारिया स्रेस्तामा २० दफाबमोजिम बेहोरा जनाई आमदानी बाँधी दाखिल गर्नू ----------------------------------- १९

हाँक्ने काम जाँच गर्नालाई आएको दस्तूर आमदानी बाँध्दा जाँच पास भैसकेपछि १९ दफाबमोजिम दिने भनी जाँच गर्ने ड्राइभर सवारलाई दिई र सोही बाँकी रहेको रुपैयाँ सवारी बारे असल काम गर्ने पुलिसलाई पुलिसका तालुकवालाका तजबीजले बक्स दिने भन्ने बेहोरा जनाई अड्डाको स्रेस्तामा आमदानी बाँधी जाँच गर्ने ड्राइभर सवारलाई दी बाँकी रहेको रुपैयाँ सवारी विषय असल काम गर्ने पुलिसलाई पुलिसका तैनाथवालाका तजबीजले बक्स दिन हुन्छ दिनू -------------------------------- २०

५ नं. ।। ।। सवारी हाँकने कामको सर्टिफिकेट पाउनेलाई सर्टिफिकेट दिंदा देहायबमोजिम सर्टिफिकेट दी त्यसको लगत कितापसमेत खडा गरी राख्नुपर्छ लेखिएबमोजिम खुलाउनुपर्ने नखुलाई खडा गरी राखनुपर्ने लगत किताप खडा नगरी वा लगत कितापमा नलेखी सर्टिफिकेट दिन हुँदैन ------------------------------------

हाँकने कामको जाँच दी पास भएका सर्टिफिकेट पाउनेलाई सर्टिफिकेट दिंदा सर्टिफिकेटमा र सो सर्टिफिकेट दिएको लेख्ने अड्डामा रहने यसै दफा बमोजिमको लगत कितापमा समेत सर्टिफिकेट पाउनेको बाबु बाज्येको नाउँ र आफ्नू नाउँ जात वर्ष वर्ण मुखमा देखिएको चिन्ह बसिरहेको घर डेराको नम्बर दायाँ वायाँ हातका बूढी औंलाको ऐनबमोजिम रेखा प्रष्ट बुझिने गरी ल्याप्चे सहीछाप गराई सर्टिफिकेट पाएका बखतको फोटो २ प्रति सर्टिफिकेट पाउने सँगली १ प्रति सर्टिफिकेटमा र १ प्रति लगत कितापमा टाँसी यस मितिदेखी फलानामितिसम्म सदर मोफसल यस ठाउँमा यो यो सवारी हाँक्ने पास भनी किटी लगत कितापको सिलसिलेवार नम्बर सर्टिफिकेट दिएको मितिसमेत राखी ४ दफाबमोजिम सर्टिफिकेट दिने अड्डाको सहीछाप गरी सर्टिफिकेट दिनू ----- १

सर्टिफिकेटमा यस मितिसम्म सवारी हाँक्नू भनी मिति तोकिदिंदा जुन साल मितिमा सर्टिफिकेट पाउने भएको छ त्यस सालका सालतमामी मितिसम्म हाँक्ने पास भनी किटी लेखीदिनू त्यस देखि बढीको मिति तोकी पास दिन हुँदैन ------------------- २

बस लरी र बग्गी हाँक्नलाई सर्टिफिकेट दिंदा बस लरी हाँक्ने सर्टिफिकेटमा बस लरी कार र कार हाँक्ने सर्टिफिकेटमा कार बग्गी हाँक्ने सर्टिफिकेटमा बग्गी र टाँगा टमटम हाँक्न मोटरसाइकल हाँक्नेमा मोटरसाईकल हाक्ने पास भनी लेखिदिनू ------ ३

हाँकने कामको सर्टिफिकेट पाउने ठहरिएका धनी र नोकरी गर्ने ड्राइभर सवारलाई सर्टिफिकेट दिंदा १।२।३ दफामा लेखिएबमोजिम खोल्नु लेखनुपर्ने सबै कुरा खोली लेखी सदरमा हाँक्ने पासमा सदर पुलिस गोस्वाराका तालुकवाला मोफसल जिल्लामा हाँक्नेमा जिल्ला गौंडा गोस्वाराका तालुकवाला बडाहाकिमको छाप र सो पास दिने अड्डाका हाकिम असिष्टेन्ट तहरीर जाँचपास गर्ने मानिसको पुछ्रे सही छाप र अड्डाको समेत छाप लगाई दिने गर्नू --------- ४

अघिका रुलको जाँच दी सर्टिफिकेट पाएकाले यो नयाँ जारी भएका ६ महीनाभित्र यो रुलको ४ को १२ दफाबमोजिम जाँच दी पास भएकालाई पाइरहेको सर्टिफिकेटका पीठमा नयाँ रुलको पनि जाँच पास फलाना मितिमा भएको छ भनी लेखी अड्डाको छाप र अड्डाका हाकिम असिष्टेन्ट जाँच गर्नेको समेत पुछ्रे छाप लगाई दी लगत कितापमा पनि जनाइ राख्ने गर्नू ----------- ५

जाँच पास भएकालाई सर्टिफिकेट पास दिंदा सर्टिफिकेटको दस्तूर मोटरकार बस लरी मोटरसाइकल हाक्ने पासको ४ रुपैयाँ बग्गी टाँगा टमटम हाँक्ने पासको १ रुपैयाँ लाग्छ ली सर्टिफिकेट सुम्पी दिनू ------------------------ ६

सर्टिफिकेटमा लेखिएका घर डेरा छाडी अन्यत्र ठाउँमा घर डेरा गरी बस्न गएमा यस मितिदेखि यस ठाउँमा यति नम्बरको घर ली वा डेरा गरी बसेकोछु भनी घर डेरा सरेका दिनैमा वा त्यसका ३ दिनभित्र सर्टिफिकेट दिएका अड्डामा जाहेरी दर्खास्त दी पाइरहेको सर्टिफिकेट र अड्डाको लगत कितापमा समेत जनाई दिनु जनाइ लिने गर्नुपर्छ घर डेरा सरेको जाहेर नगरी त्यसै बस्न हुँदैन -------------------------- ७

सवारी हाँकने कामको सर्टिफिकेट पाइरहेका मानिस मरेमा सो बेहोरा त्यसका नजीकका अपुताली खाने हकदारले मरेका ३५ दिन भित्र मरेको बेहोरा जाहेर गरी मर्नेका नाउँको सर्टिफिकेटसमेत पास दी राख्ने अड्डामा दाखिल गर्नू र अड्डाले पनि लेखिएको जाहेरी आएमा वा अड्डाले थाहा पाएमा बुझी ठहरे मर्नेले पाइरहेको सर्टिफिकेट खिची पासको लगत कितापमा बेहोरा जनाई रद्दी गरीदिनू ------------- ८

पाएका सर्टिफिकेट हराए चोरिएमा हराए चोरी भएका मितिले र पत्ता लागेमा पत्ता लागेका मितिले ७ दिन भित्र पास दिने लगत राख्ने अड्डामा जाहेरी दर्खास्त दिनुपर्छ चोरिए हराएका पासको सट्टामा अर्को नयाँ पास गराई ली सकेपछि पत्ता लागेको जाहेरी आएमा सो पत्ता लागी आएको पास अड्डाबाट खिची ली रद्दी गरीदिनू ------ ९

पाएको सर्टिफिकेट हरायो चोरियो आग लागी भयो पानीमा पऱ्यो वा झुत्रो भै च्यातिई नबुझिने भएकोले अर्को नयाँ सर्टिफिकेट गराईमाग्नालाई आएमा सर्टिफिकेट कुनै बेहोराले खिचिए खिचनुपर्ने नभै कायम नै रही अर्को नयाँ गरिदिन हुने देखिए अघिको सर्टिफिकेट यस्तो भयो भनी दर्खास्त परेकाले त्यसका सट्टामा अर्को गरिदिएको भन्ने बोली जनाई १ रुपैयाँ दस्तूर ली अर्को सर्टिफिकेट दी अघिको झुत्रो भए च्यातिए नबुझ्ने भएको सर्टिफिकेट रद्दी गरी दी लगतकितापमा पनि अघिको सट्टा अर्को नयाँ गरी दिएको बेहोरा जनाई राख्नेगर्नू चोरी नभए नहराएकोमा ढाँटी अर्को गराइलगे अघिको सर्टिफिकेट अर्कोलाई दिएको ठहरे सजाय हुनेछ ------------------------- १०

सर्टिफिकेटमा टाँसिएका फोटो उप्की हराए कुनै परिबंदबाट फोटो नबुझ्ने हुन गए अर्को फोटो सर्टिफिकेटमा टँसाई सर्टिफिकेटमा टाँसिए बाहेक अर्को नयाँ फोटो टाँसे टँसाएको भए त्यसको १ प्रति फोटो अड्डामा रहेका लगत कितापमा पनि टाँसी बेहोरा जनाई राख्ने गर्नुपर्छ ------------------------------------ ११

सवारी हाँकने कामको सर्टिफिकेट पाएकाले रुलवर्खिलाप गरेमा सजाए पाएकोमा सजाय पाएकाको छुट्टै पटक किताप खडागरी त्यसमा यसले यो रुल वर्खिलाप काम गरेकोमा फलानादिन यति सजाय भयो जनाउ आएकोछ भनी लेखी सजाय पाउनेले पाईरहेको सर्टिफिकेटमा पनि सजाय भएको जनाउने ठाउँमा जनाई हाकिमको छाप लगाईदिने गर्नुपर्छ --------------------------- १२

हाँक्ने कामको सर्टिफिकेट पास पाएकाले सर्टिफिकेटमा जुन मितिसम्म हाँक्नलाई पास भनी लेखीएकोछ त्यस मितिसम्म मात्र हाँक्न पाउँछ सर्टिफिकेटमा लेखिएका मितिदेखि पछि हाँक्ना निमित्त पास बाहाल माग्नलाई हरएक साल १४ दफामा लेखिएका म्यादभित्र दर्खास्त दी सो म्यादभित्रै पास वाहाल गराई लीसक्नुपर्छ ------- १३

पास वाहाल माग्नलाई पासमा लेखिएको आखिरी मितीका भोलीपल्टदेखि हाँक्नलाई अडकाउ नहुने गरी पासमा लेखिएका आखिर मितिदेखि ३५ दिन अगावै दर्खास्त अघि पास दिने अड्डामा गै दी निस्सा ली सो म्यादभित्र पास वाहाल गराई लीसक्नुपर्छ ---- १४

६ नं. ।।   ।। पास वाहाल गराई लिन पाउनेमा वाहाल गराई माग्नलाई हरएक साल दर्खास्त दिन आए पठाएमा देहाय बमोजिम गरी वहाल पाउन सक्नेलाई पास वाहाल दिनु लिनुपर्छ -----------------------------------------------------

पास वाहाल माग्नलाई अघि पास दिने अड्डामा पाइरहेको सर्टिफिकेट ली नोकरी गर्ने ड्राइभर सवारीले आफै हाजीर भै र धनीले अरू मानिसका हातद्वारा दर्खास्त पठाइदिए ली दफाबमोजिम गर्नू ---------------------------------- १

म्यादभित्र पास वाहाल माग्न नआए वाहाल गर्ने म्याद नाघेका ३५ दिन भित्रै पास खिची पास वाहाल माग्न आएका बखत ३।६ दफाबमोजिम गरी पास वाहाल गरी दिनू ------------------------------------------------------- २

पास वाहाल माग्नलाई असख कारण परी म्यादभित्र वाहाल माग्न आउन नसक्नेले म्यादभित्रै ४ नं. का ५।६ दफाबमोजिम अर्जी पठाई अर्जीमा

तोकिएका दिन हाजिर नभै गुजारेमा गुज्रेका ३५ दिनभित्रै हाजिर भै पास वाहाल माग्न आएमा जरीवाना नगरी र लेखिएको म्याद नाघेका ३५ दिनभित्र वाहाल माग्न आएमा वाहाल पाउनेलाई वाहाल माग्दा लाग्ने दस्तूर बमोजिमको र सो म्याद नाघिसकेपछि वाहाल माग्न आएमा मोटर बस लरीको १० रू. मोटर साइकलको १० रू. बग्गी टाँगा टमटमको २ रुपैयाँ जरीवाना गरी पास वाहाल माग्दा लाग्ने दस्तूर ली वाहाल गरिदिनू ------------------- ३

पास वाहाल गर्न पाउनेलाई पास वाहाल गरी दिंदा अघि पाएका पास वाहालमा लेखिएका आखिरी मितिदेखि १ वर्षसम्मलाई वाहाल पाउँछ त्यसदेखि बढीको पास वाहाल पाउन सक्दैन --------------------------------------------- ४

पास वाहाल गरिदिंदा ४ दफा बमोजिम फलाना मिति देखि फलाना मितिसम्मलाई वाहाल भएकोछ भनी किटिदिनुपर्छ लेखिएबमोजिम नकिटी पास वाहाल दिन हुँदैन --- ५

पास वाहाल दिंदा अैन रुलले हाँक्न दिनु हुने र रुल वर्खिलाप गरेमा सजाय नभएका वाहाल पाउन सक्नेलाई सर्टिफिकेट दिने अड्डैका हाकिमले पास वाहाल गरी दिनू ---- ६

पास वाहाल देहायका मानिसले पाउन सक्दैन पास खिची लिनू -------------- ७

मोटर मोटरसाइकल हाँक्दा मानिसको ज्यान मर्न गएमा कैले पनि -------------- १

नस्सा हुने अम्वल खाएका बखत हाँक्दा मानिस मरे अङ्ग भङ्ग भएमा ऐ -----------२

ऐन रुलले हाँक्न नपाउने भै पास खिचिए जफत भएकाले ऐ ---------------------३

भवितव्य परी मानिसको ज्यान मर्न गएमा र नस्सा हुने अम्वल नखाई हाँक्दा अङ्ग भङ्ग भएमा भने त्यस्ताले ३ वर्षसम्म सवारी हाँक्न पाउँदैन ३ वर्षसम्म पास खिची ली ३ वर्ष पछि मात्र हाक्न पाउँछ ---------------------------- ४

---

रुल वर्खिलाप गरेमा सजाय पाएको देखिएकालाई सदरको पास बाहाल दिनुपर्नेमा सदर पुलिस गोस्वाराका तालुकवालाको र जिल्लाको पास बाहाल

हुनेमा जिल्ला गोस्वाराका तालुकवाला बडाहाकिमका तजवीजले बाहाल दिनु बाहाल दिन नालायक ठहराएकोले बाहाल पाउन सक्दैन पासखिची लिनू ----- ८

पासबाहाल माग्नेलाई पासबाहाल गरी दिंदा पासबाहाल माग्नालाई आएका मितीले मुनासिव कारणले बाहेक ७ दिनभित्र बाहाल गरी दिएका दिनको मिती कट्टा भरी म्याद गुजारी थामिए जरिवाना भएकोमा सोसमेत कैफियत लेखी फलाना मितिदेखि फलाना मितीसम्मलाई पासबाहाल भनी सर्टिफिकेटमा म्याद तोकिएका मिती लेखिएका देखि मुनि लेखी बाहाल दिनेको सहीछाप गरी दिनुपर्छ ------------------------ ९

पासबाहल गराई राख्नुपर्ने सवारीको पासबाहाल पाउनेलाई पासबाहाल गरी दिंदा मोटरकार बस लरी मोटर साइकल हाँक्ने बाहाल हुनेमा २ रुपैयाँ बग्गी टाँगा टमटम हाँक्ने बाहाल पाएकोमा ।।. आना दस्तुर ली पासबाहाल गरी दिनू ---- १०

---

७ नं. ।। ।। मोटरकार बस लरी मोटरसाइकल सनसाइन बग्गी टांगा टमटम समेत सवारी हाँकी चलाउँदा देहायबमोजिम गरी चलाउनुपर्छ रुलवर्खिलाप गरी चलाउन हुँदैन ।

मोटरकार बस लरी मोटरसाइकल बग्गी टांगा टमटम इत्यादि सवारी र दमकल हाँक्ने काम सिक्दा सिकाउँदा र जाँच गर्दा सिक्ने कामको सर्टिफिकेट नपाएकालाई सिकाउन र सिकनेले सिक्न पनि हुन्छ ----------------------- १

सर्टिफिकेट ली हाँक्नुपर्ने सवारी सर्टिफिकेट पाएकाले अरुलाई हाँकी चलाउनुपर्ने काम सिकाउँदा र जाँच गर्दा २ नं. को ५ दफामा लेखिएका ठाउँमा लगी रुल दस्तूरमाफिक हाँक्ने सिक्ने सिकाउनु र जाँच लिनुपर्छ रुलबर्खिलाप गरी सिकाउन र सिक्न हुँदैन -------------------------------- २

सिक्दा सिकाउँदा र जाँच गर्दा बाहेक सर्टिफिकेट ली हाँक्नुपर्ने सवारी नेपाल सरकारको सर्टिफिकेट नभै नेपाल सरहदभित्र कतै पनि हाँकी चलाउन हुँदैन -- ३

बस लरी हाँक्ने पास पाएकाले मोटरकार र बग्गी हाँक्ने पास पाएकाले टांगा टमटम हाँक्ने सर्टिफिकेट नभए पनि हाँकी चलाउन पाउँछ ------------------ ४

सदरमा सवारी हाँक्ने कामको सर्टिफिकेट पाएकाले हाँक्न पाउने भएका जति मोफसलमा पनि हाक्न पाउँछ मोफसलका सर्टिफिकेट पाएकाले सदरमा हाँक्ने पास नभै सदरमा हाँक्न हुँदैन हाँकेपास नली हाकेसरह हुन्छ ---------------- ५

हाँक्ने कामको सर्टिफिकेट पाएका मानिस सर्टिफिकेट ली सकेपछि ४ नं. को १४ दफाबमोजिम हाँक्न नसक्ने हाँक्न दिन नहुने हुन गए अथवा बेरामी भै हाक्न नसक्ने अवस्था भएकाले सर्टिफिकेट पाएको भए पनि त्यसले हाँक्न र हाँक्न दिनसमेत हुँदैन हाँके तुरुन्त सर्टिफिकेट खिची लिनू ------------------ ६

मोटरकार, बस, लरी, मोटर साइकल, सनसाइन, बग्गी, टाँगा, टमटम चलाउँदा चलाई लानुभन्दा अघिबाटै कल पुर्जा ब्रेक हरन घंटी इष्टरीङ् पैयाँ बत्तीसमेत ठीक छ छैन भनी जाँची हेरी बुझी ठीक नभएको ठीक गराई सकेपछि मात्र चलाई लानुपर्छ ब्रेक हरन घंटी इष्टरीङ् पैयाँ ठीक नभएको जानी जानी चलाउन हुँदैन चलाई ल्याउँदा बीचबाटामा बिग्रन गएमा बात लाग्दैन ------------------------------------------- ७

सवारी हाँक्दा चलाउँदा रुलबमोजिम गरी सवारीमा बसेका मानिस लादिएको माल र सडक बाटोमा हिंडे बसिरहेका मानिस वस्तु भाउ पशु पंक्षी पुल पाटी पौवा देवालय घर पसल इत्यादि कुनै नोक्सान हुन र अरू सवारीलाई धक्का लाग्न जुध्न नपाउने हिसावसंग नोक्सानीको वचाउ गरी राम्रो हिसावसंग होशियारीसाथ रुलबमोजिम हाँक्ने गर्नुपर्दछ बेपरवाहीसंग रुलबर्खिलाप गरी हेलचक्राइ गरी हाँक्न र हाँक्न दिनसमेत हुँदैन ---------------------------- ८

मोटरकार बस लरी मोटरसाइकल चलाउँदा चाँडो लैजानुपर्ने भए पनि १ घण्टामा देहायका ठाउँमा देहायबमोजिमको माइलसम्म जान सक्ने हिसाबका बेगसम्म मात्र हाँक्न हुन्छ । त्यसभन्दा बढ्ता चल्ने बेगसंग हिड्ने गरी हाँक्न हुँदैन दमकलका हकमा दमकल हाँक्ने सवाल रुलबमोजिम हुन्छ ----------- ९

## मोटरकार मोटरसाइकल हाँक्दा

शहर वस्तीभित्र १ घण्टामा १० माइल -------------------------------------- १

कान्तिपुरका विष्णुमती पूर्व धोवीखोलादेखि पश्चिम वागमती उत्तर लाजिमपाट भाटभटेनी महाराजगंजदेखि दक्षिण यति ४ भंज्याङभित्र १ घण्टामा १५ माइल ----- २

## बस लरी हाँक्दा

सदर वस्तीभित्रमा १ घण्टामा ८ माइल -------------------------------------- ४
माथि २ दफामा लेखिएका ४ किल्लामा १ घण्टामा १० माइल ---------------- ५
लेखीएबाहेक अरू ठाउँमा १ घण्टामा २० माइल ------------------------------६

एकाका नाउँको सर्टिफिकेट ली अर्काले हाँक्न र दी हँकाउनसमेत हुँदैन दिए लिए दिने लिने दिन लाउनेलाईसमेत बात लाग्छ ---------------------------- १०

सवारी चलाउँदा चलाउन लान नहुने गरी बिग्रिए भासिन जाने संभव भएका ठाउँ र चलाई लाँदा खतरा पर्ने वा सवारी चलाउनलाई मनाही भएका ठाउँमा चलाई लान हुँदैन ------------------------------------------------------ ११

सवारी चलाउन हुने बाटो पुलहरु बिग्री वा कुनै परिबन्दले चलाउन नहुने हुन गएमा सो बाटो पुलको हेर विचार गर्ने वा सो बनाए मर्मत गरी रहेका बखत सो बनाउने मर्मत गर्नेले सो ठाउँमा जाने ठाउँदेखि केही फरक यस ठाउँबाट सवारी लान यतिसम्म बंद छ भनी सबैले देख्ने बुझ्ने गरी लेखी सवारी लान नहुने गरी बाटोसमेत छेकी राख्ने गर्नुपर्छ ---------------------------------- १२

नेपाल सरकारको सर्टिफिकेट पाएकाले पनि जुन सवारी हाक्नलाई सर्टिफिकेट पास पाएकोछ, सोही सवारी मात्र हाँक्न पाउँछ पासमा नलेखीएको सवारी हाँक्न हुँदैन --- १३

जुद्धबारुणयन्त्र अर्थात् दमकल आगलागी भएका ठाउँमा लैजाँदा फर्काई ल्याउँदा दमकल चलाउने रुलबमोजिम घण्टी दिदै अघि पछि शहर बस्ती भित्र सडक बाटोमा चलाई लाँदा घण्टी दि ९ दफामा लेखिएका मोटर हाँक्ने बेगबमोजिमको सम्म हिंड्ने सक्ने गरी मोटर रुल चलाउने रुलबमोजिम हाँक्ने गर्नू ------------------ १४

होश ठीक नभएको वा होश ठीक भए पनि ४ नं. को १४ दफाबमोजिम हाँक्न नसक्ने अवस्था भएका वा नसा लाग्ने अम्बल खाइरहेका बखत कुनै सवारी पनि हाँक्न र हाँक्न दिनसमेत हुँदैन --------------------------------- १५

बाहिरपट्टी मानिस राखी हिंडाउन हुने गरी बनिएको डिकीसिट बाहेक मोटरको पखेटा र फुल बोर्डमा मानिस राखी चलाउन हुँदैन -------------------------- १६

सनसाइन र साइकलमा जति जवान बस्ने सिट रहकोछ त्यति जवान मात्र बसी चलाउनू त्यस भन्दा बढी बसी चलाउन र चलाउन दिनसमेत हुँदैन ---------- १७

सवारी तानी लान नसक्ने भएका बूढा बूढी काना खोरंडा सारै दुवला वा घाउ पीर परेका वा बेरामी भै सवारी तानी लान नसक्ने भएका घोडा घोडी खच्चर बयल राँगाहरू जोती चलाउन हुँदैन --------------------------------------- १८

लगत राखी चलाउनुपर्ने सवारीहरूको १ नं. को १७।१९ दफाबमोजिम नम्बर नराखी र भाडामा रहेको सवारीमा भाडा भनी लेखिएको र भाडा लिने दर यति जवान मात्र राखी चलाउनू भनी लेखी अड्डाको छाप लगाएको पुर्जी नोटीस कागज नटाँसिएको सवारी चलाउन र बढी जवान राख्न बढी भाडा लिनसमेत हुँदैन -------- १९

देशबाट झिकाई आएका मोटरकार बस लरीमा यहाँ बढी अर्थात् ड्राईभर सीटघर बनाउँदा देशबाट बनिआएका नापबमोजिमदेखि बढी नापको बनाउन र सवारी हाँक्नेका दाहिनेतर्फ अरु कुनै मानिस वस्तु राखी चलाउन हुँदैन. ------ २०

बस लरीमा काठको फ्रेमघर यहाँ बनाउँदा यो बस लरीको देशबाट जडान गरेको स्यासीसको नापभन्दा १ फुटदेखि बढी बढाई काठको मघर बनाई राखेको बस लरी चलाउन र चलाउन दिन हुँदैन. -------------------------- २१

पेट्रोल रहेको भाँडा मोटरमा बाहिर पट्टि राख्दा विजुली तारको नजीक राख्न र मोटर चलाउँदा तेल वा ग्रीज बगाई चलाउन हुँदैन. ------------------------ २२

मोटरकार बस लरी मोटरसाइकल सनसाईन बग्गी टाँगा टमटम केही कारणले बाटोमा कुनै ठाउँमा थामी राख्नु पर्ने भएमा बाटोमा नरोकिने गरी छेउ लगाई राख्ने गर्नुपर्छ बाटो रोक्ने गरी राख्न हुँदैन. ------------------------------- २३

मोटरकार बस लरी चलाई लाँदा बिग्री वा अरू कुनै बेहोराले बाटोमा त्यसै राखी छाड्नुपर्ने भएमा बाटो नरोकिने गरी छेउ लगाई कुरुवा राख्नुपर्छ कुरुवा नराखी त्यसै छाड्न हुँदैन ---------------------------------------------- २४

जुनसुकै सवारी चलाउँदा आफ्नू आफ्नू सवारीको बायाँ किनारा भै ८ दफामा लेखिएबमोजिम अरू सवारी मानिस बस्तु मालको समेत होशियारी साथ बचाउ गरी हिंडाउनू. ------------------------------------------------------ २५

पछिबाट भएका सवारीले अघिबाट गएका सवारीलाई नाघी उछिनी अघि जानुपर्ने भएमा अघिबाट जानेलाई दिनुपर्ने हरन घंटीसमेत दिनुपर्ने इशारा जनाउ नदी त्यसै उछिनी लैजान हुँदैन, अघिबाट जानेलाई दिनुपर्ने हरन घंटी इशारा जनाउदी अघि गएकाको दाहिनेतिरबाट धक्का नलाग्ने मानिस वस्तुहरूसमेत कुनैको नोक्सानी नहुने हिसावसंग लैजाने गर्नुपर्छ ----------------------------- २६

एउटा अगाडि गएको र अर्को पछाडिबाट आएकोमा अगाडि गएकाले पछाडिबाट आएको सवारीलाई रोक्नुपऱ्यो भने पछाडिकालाई २८ दफाबमोजिम हरन घंटी इशारा दी रोक्नुपर्छ. ------------------------------------------- २७

मोटरकार बस लरी मोटरसाइकल सनसाइन बग्गी टांगा टमटम हाँक्नेले अरू सवारीलाई इशारा गर्दा घंटी हरन जनाउ दी देहायबमोजिम इशारा दिने गर्नुपर्छ. ---- २८

रोक्नुपर्दा दायाँ पाखुरा बाहिर झिकी कुइनादेखि औंलाका टुप्पासम्म हात ठाडो गरी उठाउनू. ------------------------------------------------------- १

दाहिन जानुपर्ने भएमा दाहिने हातका पाखुरादेखि लिएर औंलाको टुप्पासम्म हात तन्काई दाहिने तर्फ देखाउनू. ------------------------------------------ २

बाँया जानुपर्ने भएमा लेखिएबमोजिम दाहिने हात बाहिर निकाली कुइना दोब्रयाई हत्केलाले बायाँतर्फ देखाउनू. ------------------------------------------ ३

बिस्तारसंग लानु पर्नेमा लेखिएबमोजिम हात बाहिर झिकी हत्केला तल फर्काई बिस्तारसंग हात तलमाथि गर्ने गर्नुपर्छ. ----------------------------------- ४

दाहिनेतर्फबाट लैजानु भनी इशारा दिंदा दाहिने हातको औंलासम्म तन्काई तलतिर झारी अगाडि पछाडि हल्लाउनू. ------------------------------------ ५

दुर्घटनाको बचाउको निमित्त चलाई ल्याएको सवारी रोक्नू हटाउनू दायाँ बायाँ लागी वा उछिनी जानु चलाउनु भनी इशारा दिनु परी पुलिसका अफिसरहरूले ८ नं को ५ दफाबमोजिम दिएको इशारा बुझी इशाराबमोजिम गर्नुपर्छ ------- २९

दोहरो सवारी चलाउन नहुने पुलबाट मोटरकार बस लरी बग्गी टांगा टमटम गाडा लानुपर्दा आफू जानेतिर अगाडिबाट अर्को मोटर बस लरी गाडा बग्गी टांगा टमटम पुलमा ल्याउन नपाउने गर्नालाई पुलमा पुग्नुभन्दा अघि बाटै २८ दफाबमोजिम हरन घण्टी इशारासमेत दिई उसतिरबाट अरू सवारी ल्याए नल्याएको विचार गरी अरू सवारी नल्याएको भए बिस्तारसंग हरन घण्टी दिंदै लैजानुपर्छ हरन घण्टी नदी त्यसै लैजानु र अगाडि तिरबाट हरन घण्टी दिदा दिदै त्यसै अटेर गरी लैजान वा जोरसंग लैजानसमेत हुदैन हरन घंटी दिएको सुने ल्याएको देखिनासाथ पुल नपुग्दै फराकिलो ठाउँमा रोकी राखी अगाडिबाट आएको सवारी पास भैसकेपछि मात्र हरन घंटी दिदै लैजाने गर्नू ------------- ३०

पुलमा दुवै तर्फबाट मोटर बग्गी टांगा टमटम गाडा आएमा पछिबाट लगेको मोटर बस लरी र पछाडिबाट हटाइ लान नहुने बग्गी टांगा टमटम ल्याएमा मोटर वस लरी पछाडिबाट हटाई लगी फराकिलो ठाउँमा लगी राखी अगाडि तिरबाट ल्याएको सवारी पास भैसकेपछि चलाई लाने गर्नू ------------------- ३१

मोटरकार बस लरी बग्गी टांगा टमटम गाडा कच्ची धुलो पुलबाट लैजानलाइ चलाई लैजादा भासीई बिग्रने हुन्छ हुँदैन भनी त्यस कुराको विचार गरी मात्र लैजाने गर्नुपर्छ भासी बिग्रने ठाउँबाट त्यसै चलाई लान हुँदैन ---------------- ३२

श्री ५ महाराजाधिराज श्री ३ महाराजको सवारी भैरहेका बखत सवारी देख्नासाथ र आगो निभाउन जानलाई हरन घंटी दिई वारुणयन्त्र अर्थात् दमकल चलाई ल्याएका बखत घंटी सुनी देख्नासाथ तुरुन्त जुनसुकै सवारी मानिस पनि बायाँ किनारा लगाई रोकी राखी पास भैसकेपछि मात्र चलाउनुपर्छ

नरोकी त्यसै चलाउन हुँदैन रुलबमोजिम गरी आगो निभाउनलाई दमकल चलाई लाँदा केही भै किच्न गए पनि दमकल चलाई ल्याउनेलाई वात लाग्दैन ---------------------------------------- ३३

मोटर सनसाइन बग्गी टांगा टमटम रिक्सा गाडा सवारी मोडमा र सडकका दायाँ बायाँ सानु गल्ली सडक छेडा पुलहरूमा र बाटोको देउडीमा औ मोटर बग्गी निकाल्ने ढोका भएका ठाउँमा पुग्नु भन्दा अन्दाजि २५।३० गज फरकदेखि मानिसलाई किच्न अरू सवारीसंग नजुध्ने धक्का लगाउन नपाउने गर्नालाई हरन घंटी सुन्ना साथ वा सवारी देख्ना साथ सवारी हटाउन रोक्न सक्ने गरी जनाउ हरन घंटी अवाज दिंदै विस्तारैसंग हाँकी पुलिस भएका ठाउँमा पुलिसलाई यसतिर जान्छु भनी २८ दफामा लेखीएबमोजिम इशारा दिनुपर्ने दिई अरू सवारीसंग जुध्न र मानिसलाई नोक्सान नहुने गरी त्यस कुराको विचार गरी पुलिसले दिएको इशारासमेत बुझी हाँकी लैजाने गर्नुपर्छ लेखिएबमोजिम नगरी चलाई लान हुँदैन ---------------------- ३४

बाटामा हाती घोडा गाई गोरु-राँगा भैसी इत्यादि कोही जीवाजन्तुहरु हिडाउँदा लाँदा ल्याउँदा मोटर बग्गी इत्यादि सवारी देख्दा झस्कने भै नोक्सान पर्ने शंका देखिएमा ल्याउनेले र सवारी चलाई ल्याउनेले पनि झस्कने जीवाजन्तु रोक्ने हटाउने अवस्था ठाउँ भए हटाउनू हटाउन लाउनू हटाउने ठाउ नभएको भै रोक्नुपरे सवारी रोकी झस्कनेलाई लगी वा हटाउन लगाइसकेपछि मात्र चलाई लानुपर्छ ----------------- ३५

जनाउ हरन घंटी इशारा दिदा लाँदा पनि मानिस वा अरू जीवाजन्तु सवारीहरू हटेन भने त्यसै मिची चलाई लैजान हुँदैन सो ठाउँमा नपुग्दै तुरून्त रोकी उसलाई हटाई चलाई लैजानुपर्छ ----------------------------------------- ३६

पुलिस र पुलिसका अफिसरले सवारी रोक्नुपर्ने मुनासिव कारण परी रोकेमा हाँक्नेले तुरून्त रोक्नू र केही कारणले सवारी हाँक्नेको पत्ता सोधे सर्टिफिकेट

खोजे केही कुरा बुझ्न सोध्नुपरी सोधे बुझेमा पनि तुरुन्त जवाफ दिनुपर्नेमा जवाफ दिनु र देखाउनु पर्ने भएको देखाउनुसमेत पर्छ ---------------------- ३७

मोटरकार बस लरी मोटरसाइकल सनसाइन इत्यादि सवारी हाँक्दा सो आफूले हाँकेका सवारीले कोही मानिस मिची मरे घा चोट पर्न गए केही नोक्सान हुन गएमा तुरून्त सवारी रोकी सो ठाउँदेखि नजीकमा भएका पुलिस पुलिसका अफीसरहरू कहाँ गै वा पठाई जाहेर गर्नुपर्छ जाहेर नगरी त्यसै भागी जान हुदैन -------------------- ३८

जात्रा मेला उत्सवहरू समेत धेरै सवारी मानिसहरू चल्ने बखत भाडा वार मोटरकार बस लरी बग्गी टांगा टमटम चलाउँदा जुन ठाउँमा राखी जुन बाटोबाट जुन बेगसंग हाँकी चलाउनु सवारीहरु पार्कमा राख्दा पनि जुन ठाउँमा जुन हिसावसंग राख्नू भनी पुलिसले उर्दी दिएमा सोबमोजिम गर्नुपर्छ ---------- ३९

मोटरकार बस लरी मोटरसाइकल सनसाइन बग्गी टांगा टमटम रिक्सा गाडा चलाउँदा देहायका टायमदेखि देहायका टायमसम्म बत्ती बाली चलाउनुपर्छ बत्ती नबाली त्यसै चलाउन हुँदैन ------------------------------------------ ४०

सडकमा बिजुली बत्ती जडान भएका ठाउँमा बेलुका बिजुली बत्ती बलेदेखि निभाउने टायमसम्म ---------------------------------------------------- १

सडकमा बिजुली बत्ती जडान नभएका ठाउँमा विजुली नबलेको बखतमा बर्षामा बैशाखदेखि आश्विनतक बेलुकाको ७ बजे र हिउँदमा कार्तिकदेखि चैत्रतक बेलुका ५ बजेदेखि अर्थात् साँझको बत्ती बल्ने टायमदेखि रातदिन नछुटिएसम्म ------------- २

मोटरकार बस लरी मोटरसाइकल बग्गी टांगा टमटम रिक्सा गाडा ४० दफामा लेखिएका बत्ती बल्ने टायमदेखि उज्यालो नभएसम्म हिडाउँदा देहायबमोजिमको बत्ती बाली चलाउनुपर्छ लेखिएका बत्ती नबाली चलाई लान हुँदैन -------------------- ४१

मोटर मोरसाइकलमा अगाडि पछाडि दुवै ठाउँमा सनसाइन बग्गी टाँगा टमटम रिक्सा गाडाहरूमा अगाडिपट्टि त्यसैको लालटेन बत्ती भए लालटेंन बत्ती र त्यसको लालटेंन बत्ती नभए अरू लालटेंन भए पनि राखी बाली चलाउनुपर्छ टर्चलाइट बाली लान हुँदैन ------------------ १

बत्ती बाली लाँदा आफ्ना अगाडिबाट अरू सवारी ल्याएका बखत हेड्लाईटको बत्ती बाल्न हुँदैन साइटलाइट भए साइटलाइट र साइटलाइट जडान नभएकोमा हेटलाइटको बत्ती भए पनि मधुरो गराई बाल्नू ------------------ २

मोटरकार बस लरी मोटरसाइकलमा अगाडिपट्टि हेडलाइट साइटलाइट र पछाडि पट्टि नम्बर प्रष्ट देखिने चिन्हिने गरी नम्बरमा लाइटपर्ने गरी ब्याग लाइट बाल्नुपर्छ टाढाबाट नम्बर प्रष्ट नबुझ्ने र नम्बरमा लाइट नपर्ने गरी वा नम्बर नदेखिने गरी मधुरो बत्ती बाल्न हुँदैन ----------- ३

अगाडिबाट अरू सवारी नल्याएका बखत हेडलाइटको बत्ती बाल्दा पनि बत्तीको लाइट सडकमा मात्र पर्ने गरी बाल्नू ----------------------- ४

मोटरसाइकलहरूको पछाडिपट्टि व्यागलाइट बाल्दा र रातो सेतो बत्ती बाल्ने लालटेन रहेकोमा सेतो रातो र रातो नभएकोमा सेतो लाइटको बत्ती बाले पनि हुन्छ ------------------------------------------- ५

कुनै कारणले बीच बाटामा बत्ती निभ्न गयो वाल्नलाई अनुकूल मिलेन भने नोक्सानीको बचाउ गरी बिस्तारैसंग बराबर हरन घंटी दिई हाँक्नु पुलिस भएका ठाउँमा पुगेपछि पुलिसलाई पनि थाहा दिई लेखिएबमोजिम गरी हाँकी लैजानुपर्छ ------------------------------------------- ६

८ नं. ।। ।। सवारीहरू राख्ने चलाउनेहरूले रुलबमोजिम गर्ने गरेको छ छैन भनी पुलिस कर्मचारीले बराबर रेखदेख गरी रुलबर्खिलाप भए घा. चोट नोक्सान परेको देखिए देहायबमोजिम गर्नू गर्न लगाउनू नगरे बात लाग्छ -------------------

मोटर सनसाइन बग्गी टांगा टमटम गाडी रिक्सा इत्यादि सवारी चलाउनेहरूले रुलबमोजिम गर्ने र चलाउने गरेको छ छैन भनी बराबर रेखदेख जाँच बुझ गरी गराई रुलबमोजिम गर्नु गर्न लगाउने गर्नुपर्छ रुलबर्खिलाप गरे भएको देखी त्यसै नीच मारी बस्न हुँदैन ---------------------------------------- १

सवारी हाँक्ने मानिसले सवारी हाँक्दा नोक्सानी परे रुल बर्खिलाप गरेकोमा कार्बाई गर्नानिमित्त सवारी हाँक्नेको नाउँ वतन बुझ्नुपर्ने वा मुनासीव माफिकको अरू केही सोध्नु बुझ्नु उर्दी दिनु सवारी हाँक्नलाई पाइरहेको सर्टिफिकेट खोजी गर्नुपर्ने भै खोज बुझ गर्नालाई वा चर्ति फिर्ती मिलाउन चलाई ल्याएको सवारी र अरू सवारी मानिसहरूको बचाउ गर्नाका लागी समेत सवारी रोक्नु पर्ने आवश्यक परी रोक्नुपर्ने देखिएमा पुलिस कर्मचारी हरूले श्री ५ श्री ३ सर्कारको सवारी भएको बाहेक अरू सवारीहरू रोक्नुपरेमा रोक्न र बुझ्नुपर्ने कुरो बुझ्नु हुन्छ ------------------------- २

जात्रा मेला उत्सवसमेत धेरै सवारी मानिसहरु चल्ने जम्मा हुने ठाउँमा सवारी मानिसहरुको नोक्सान हुन नपाउने बन्दोवस्त गर्ने गर्नालाई यस हिसावसंग यस ठाउँबाट चलाउनू यस ठाउँमा यस हिसाबसंग राख्नू भनी ठाउँ मौकाको विचार गरी मुनासीवमाफीकको जो चाहिने पुलिस अफिसरले उर्दी दी नोक्सानीको वचाउ गर्ने गराउने गर्नुपर्छ --------------------------------------------- ३

जुनसुकै बखतमा पनि पुलिस कर्मचारीहरुले १।२।३ दफाबमोजिम सवारी रोक्नु परी रोक्दा नरोकी वा खोजेका बखत सर्टिफिकेट देखाउन नसक्ने उर्दी दिएको नटेर्ने सवारी हाँक्ने मानिसलाई पक्राउ गरी मानिस चढेको भए सवारीको नम्बर हाँक्न लाउनेको र लेखिएबमोजिम भएको कसैले देखिए सो मौकामा देख्ने सवारीमा वस्ने मानिसहरु समेतको नाउँ वतन टिपी सवारीमा चढेका मानिसलाई जहाँ पुऱ्याउनुपर्ने हो पुऱ्याउन दी आफ्ना अड्डामा रिपोट गर्नुपर्छ ------------------------------------- ४

दुर्घटनाको बचाउका निमित्त चलाई ल्याएको सवारी रोक्नु छोड्नु हटाउनु दायाँ वायाँ लगाउन लाउनु पठाउनुपर्ने भएमा देहायबमोजिमको इशारा पुलिस कर्मचारीले दिने गर्नु र सवारी चलाई ल्याउनेले दिएको ७ को २८ दफाबमोजिमको इशारा बुझ्ने गर्नुपर्छ ------------------------------------ ५

## रोक्ने ईशारा

सामुन्नेबाट आईरहेको सवारी रोक्नु पर्नेमा आफ्नू दाहिना हातका काँधदेखी माथि पूरा ठाडो गरी हातका औंलाहरू जोडिने गरी तनक्क तानी हत्केला सवारीतिर फर्काउनू -- १

दुईतिरबाट दुवै सवारी एकै ठाउँबाट आयो भने ती दुई मध्ये एउटालाई मात्र रोक्नुपर्‍यो भने रोक्नुपर्ने सवारीको ड्राइभरतिर आफ्नू मुहुडा फर्काउनू जुन कुरो गर्नाले सो इशारा मलाई दिएकोछ भनी ड्राइभरले बुझ्दा रोक्न हाँक्न सक्ने गरी इशारा दिनू ------------------------------------------------------ २

पछाडिपट्टिबाट आएको सवारी रोक्नुपर्दा आफ्नो पूरा दायाँ बायाँ हात कुमको बराबरी तन्काई हत्केलाको पछिल्लो भाग सो सवारीको ड्राइभरतर्फ फर्काउनु - ३

जरूरत परेमा २ नं. को इशारा दाहिने हातले पनि दिन हुन्छ तर भरसक देब्रे हातले नै दिनु ----------------------------------------------------------- ४

सामुन्ने र पछाडितिरबाट आइरहेका सवारी एकैबाजि रोक्नुपरेमा १।२ नं. का तसबीरबमोजिम हात उठाउनू तन्काउनू ----------------------------------- ५

पछाडिपट्टिबाट आएको सवारी रोक्दा पुलिसले सामुन्ने अगाडि हेर्नको अगावै पछिल्तिर मंटो फर्काई सवारी हाँकी आउने ड्राइभरले इशार बुझेको छ छैन भनी हेर्नुपर्छ ---- ६

## छोड्ने इशारा

सवारीलाई अगाडितिर चलाउन दिनलाई हात तन्काएको तन्काई अगाडीतिरबाट गोलाकार गरी घुमाई ल्याई कुमको अगाडि सिधा भएपछि कुहिनु खुम्च्याई बायाँपट्टिको कुममा छुवाउनु ------------------------------------------- ७

१ नं. को इशाराले रोकिएका सवारी छोड्नलाई पाखुरा तल झारी ड्राइभरतिर अलि अलि फर्की हरथुङ्गा हल्लाई इशारा दिनू ------------------------------ ८
मोटरहरू चलाउन लाएको हो होइन भनी १ को १९ दफामा लेखिएबमोजिम टायम टायममा जाँची चलाउन दिन हुने देखिएकोमा फलाना दिन जाँच भयो भनी र चलाउन नहुने देखिए बिग्रेकाले बिग्रेको नबनाई नचलाउनू भनी निस्सा लेखी दिनुपर्छ -------- ९

९ नं. ।।   ।। सवारीहरू चलाई ल्याउँनेले चलाई ल्याउदा सवारीले कुनै किसिमबाट मानिसलाई कुल्ची मिची गरे घा चोट परे रुल बर्खिलाप गरे नोक्सान परेमा घाइतेलाई १० नं. बमोजिम गरी सवारी हाँकी आउनेलाई देहायबमोजिम गर्नुपर्छ -----------

हीराको चाँद लाउने र त्यसदेखि माथिका दर्जालाई मालिक संझनुपर्छ त्यस्ता मालिकको सवारी वा मालिकका जहानलाई राखी ड्राइभरले हाँकी चलाई ल्याएको अवस्थामा सवारीबाट मानिस मरे मर्ने जस्तो देखिए अङ्ग भङ्ग घा चोट पर्न गएमा सवारी हाँकी ल्याउनेलाई मालिकले जिम्मा लिए घर पुग्नासाथ तुरुन्त बुझाउन ल्याउने गरी जिम्मा दी छाडी र जिम्मा नलिए जिम्मा लिने नभए मानिस साथैमा गै सवारीमा बस्नेलाई घर पुर्‍याउन लगाई पक्री र मरे अङ्ग भङ्ग नभए मर्ने जस्तो नदेखी घा चोट वा रुलवर्खिलापकोमा पक्राउ नगरी ४ दफाबमोजिम खोल्नुपर्ने कुरा खोली रिपोट गर्नू -------------------------- १
मालिकले नै सवारी चलाई ल्याउँदा मानिस मरे अङ्ग भङ्ग भए घा चोट परे वा रुलवर्खिलाप गरेमा पक्राउ नगरी ४ दफाबमोजिम खोल्नुपर्ने कुरा खोली आफ्ना अड्डामा रिपोटसम्म गर्नू ------------------------------------------ २
मालिकहरू सवारीमा नभै अरू सवारीमा राखी चलाई ल्याएका वा सवारीमा राखी नल्याएका अवस्थामा मनिस मरे घा चोट परे अङ्ग भङ्ग जस्तो नदेखिएको भए हाँकी ल्याउने ड्राइभर सवारलाई पक्री र घाउ चोट केही नपरेको रुलवर्खिलाप मात्र भएकोमा मोटर बग्गी हाँक्दा रुलवर्खिलाप गरेमा

रुलवर्खिलाप गर्नेलाई पक्राउ नगरी र सो बाहेक अरू सवारीले रूलवर्खिलापसम्म गरेमा मानिस पक्राउ गरी वा सवारी लगी ४ दफाबमोजिम खोल्नुपर्ने कुरा खोली रिपोट दिनू -------------------------- ३

सवारीबाट मिची कुल्ची मरे घा चोट परे नोक्सान परेको रुलवर्खिलापसम्म भएको मानिस नमरे घाउ चोट नपरेकोमा रिपोट गर्दा यस नम्बर यो सवारी चलाई ल्याउने फलानाले फलाना दिन यस बखत यसो गऱ्यो भनी देखे बुझेको कुरा अरूले देखे देख्ने र सवारीमा बस्ने मानिसहरू समेतको नाउँ वतन समेत भरसख खोली आफ्नू अड्डामा रिपोट गर्नू ---------------------------------- ४

१० नं. ।। ।। सवारीले मानिसलाई कुल्ची मिची घा चोट अरू कुनै नोक्सान पारेमा घा चोट लगाउने नोक्सान पारिदिनेलाई ९ नं. बमोजिम गरी र घाइतेलाई देहायबमोजिम गरी औषधि गर्न लगाई आफ्ना अड्डामा रिपोट गर्नुपर्छ

पुलिसले देखेका ठाउँमा घा चोट लगाईमाग्नेलाई पुलिसले नै लाने हुनाले पुलिसले नदेखेका ठाउँमा घा चोट लगाई माग्नेले सो ठाउँदेखि नगीचमा भएका पुलिसमा उजुर गर्नुपर्छ ---------------------------- १

घा चोट लागेका पुलिस आफैले देखेमा र हाँक्नेले नै बाधा लगाई माग्नेले अथवा अरू उनाउ मानिस कसैले भन्न आएमा घा चोट लागेका मानिससंग केभै कसको सवारीले कुन टायममा कुन किसिम संग घा चोट लागेको हो सो भएको देख्ने को को छ भनी मुखले मात्र सोधी बुझी घा चोट लगाउने मानिस मौजूद भए त्यसलाई माथि ९ नं. मा लेखिएबमोजिम गरी घा चोट लगाई माग्नेलाई तुरुन्त सुविस्ता साथ बन्दोबस्त गरी नजीक हस्पताल भएका ठाउँमा हस्पतालमा पुऱ्याई र हस्पताल नभएका ठाउँमा इलाज गर्ने वन्दोबस्त पुऱ्याई खाने बन्दोबस्त नभएकालाई ऐनले घा खर्च दिनुपर्नेबाट खाना खर्च समेत ली औषधी गराइदिनुपर्छ ----------------------------------------- २

यसै नम्बरका २ दफाबमोजिम घा चोट लगाईमाग्ने मानिसलाई हस्पतालमा लैजाँदा अङ्ग भङ्ग भएको र हिंड्न नसक्ने असक रहेछ भने सो मिच्ने मोटर बग्गीमै हाली तुरुन्त हस्पताल लाने गर्नु स्वास्नीमानिस चढी आएको मोटर बग्गी भए चढेका स्वास्नीमानिसलाई जहाँ पुऱ्याउनुपर्नेहो तुरुन्त पुऱ्याई आइसकेपछि सोही मोटर बग्गीमा हाली हस्पताल लाने गर्नू सोबमोजिम लानालाई मोटर बग्गी चढ्नेले पनि मोटर बग्गी दिनुपर्छ मानिस मिची हाँक्ने मानिसका हकमा यसै रुलका ९ नं मा लेखिएबमोजिम गर्नू ---------------- ३

यसै नम्बरका २।३ दफाबमोजिम घा चोट लगाइमाग्नेलाई औषधी गर्ने बन्दोबस्त मिलाएपछि उसै बखत तुरुन्त पुलिस गोस्वारामा गै घा चोट लगाई माग्नेसंग आफूले बुझेका कुराको र मिचिदाका अवस्थामा आफूले देखे बुझेका कुराको समेत रिपोट गर्नुपर्छ । यो रिपोट गर्दा फलाना फलाना चढेको फलानू सवार ड्राइभर भएको यो सवारीले यस्तो अवस्था परी यस्तो भयो भनी रिपोटदिनू मानिस पक्री बुझाउँदा पनि सो बेहोराको चलानीसाथ बुझाउनू मोटर मोटरसाइकलले गरेकोमा पुलिसले नम्बर टिपी ड्राइभर सवारको भए सर्टिफिकेट पनि खिच्नुपर्छ --------- ४

हस्पतालले पनि पुलिसले ल्याएका मानिसको घाजाँच गरी घाजाँचको १ प्रति कागज कोतवालीमा पठाई दी घा लगाई माग्नेलाई हस्पतालमा राखी औषधी गर्नुपर्छ घरमा डाक्टर लगी औषधि गर्न सक्नेले घरमै लगी गर्छु भने घरमा लान दिन पनि हुन्छ -------------------------- ५

रिपोट परेपछि कोतवाली र पुलीसले घा चोट लगाई माग्नेको र सो लगाई दिने मानिसको तुरुन्त कागज गराउनुपर्छ सो कागज गराउँदा घा लगाईमाग्नेमानिस हिंड्न नसक्ने घाइते रहेछ भने निज बसेका ठाउँमै गै र हिडडुल गर्न सक्ने भए अड्डैमा ल्याई गराए पनि हुन्छ घा चोट

लगाउने मानिस भागी कागज गराउन नपाएमा ऐन सवालबमोजिम गरी कार्वाइ गर्नू -- ६

ज्यान मर्न गएको र अङ्ग भङ्ग भएकोमा सरजमीन तैकात गर्नुपर्छ सो गर्दा तुरुन्त तैकात गर्नू ज्यान नमरेको र अङ्ग भङ्ग नभएकोमा सरजमीन तैकात नगरी अरु प्रमाणमात्र बुझे पनि पुग्छ ------------------------ ७

ज्यान मरेकोमा र अङ्ग भङ्ग भएकोमा मिलापत्र गर्न पाउँदैन सोबाहेक अरु घा चोट परेमा दुवैजनाको सल्लाहले मिली जान्छन् भने मिलापत्र गर्न पाउँछ सो मिलापत्र गर्दा ऐनबमोजिम बक्सौनी ली मिलापत्र गराउनुपर्छ --------------- ८

११ नं. ।। ।। ऐनले पटकेको हिसाबले सवारी हाँक्नेलाई सजाय हुनेमा सजाय दिने गरी फैसला भैसकेपछि सो सजाय भएको लेख्ने पटके किताप सजाय दिने अड्डाले खडा गरी यसले यो काम गरेमा यो सजाय हुनेभै फलाना मितिमा फैसला भयो भनी प्रष्ट खोली पटके कितापमा लेखी सर्टिफिकेट दिने अड्डालाई पनि सजाय भएको जनाउ लेखी पठाईदिनू लेखिएबमोजिम जनाउ पठाइदिएमा र लेखी नपठाए पनि सजाय भएको देखिए बुझिएमा सर्टिफिकेट दिने अड्डाले बुझी आफ्ना अड्डामा रहेका सर्टिफिकेटका लगत कितापमा र सवारी हाँक्नेले पाएको सर्टिफिकेटमा सजाय पाएको पटक लेख्ने ठाउँमा समेत जनाउ दी हाकिमको समेत छाप लगाईदिनू ।

१२ नं. ।। ।। मोटर बग्गी मोटरसाइकल हाक्दा मानिसको ज्यान मर्न गएमा र नस्सा हुने अमल खाई हाँक्दा मानिस मरेको वा अङ्ग भङ्ग भएकोमा त्यस्ताले फेरी हाँक्न पाउँदैन नस्सा हुने अम्मल नखाई त्यसै हाँक्दा अङ्ग भङ्ग भएकोमा र भवितव्य परी ज्यान मर्न गएकोमा भने ३ वर्षसम्म त्यस्ताले हाँक्न पाउनेछैन ३ वर्ष पछि मात्र हाँक्न पाउनेछ ।

१३ नं. ।। ।। माथि लेखिएका दफा नंबरहरुमा पुलीस कोतवालीले गर्ने भनी लेखिएका कामहरु मोफसलमा पर्न आएमा पुलिसले गर्नुपर्ने काम पुलिस ठाना

इन्सपेक्टर भएको जिल्लामा जिल्लाका पुलिस ठाना इन्सपेक्टरले र नभए जिल्ला अमिनी अदालतहरुले गर्नु गर्नलाउनुपर्छ ।

१४ नं. ।। ।। सवारीबाट मानिसको ज्यान मर्न गए अङ्ग भङ्ग घा चोट पर्न गएकोमा पुलिसले पक्राउ गरी ल्याएका र आफै हाजिर हुन आएकालाई सरजमीन तहकिकात गर्न पर्नेमा तहकिकात भै नआएसम्म खाली हीरासतमा थुनी र सरजमीन तहकिकात प्रमाण बुझिए पछि देहायबमोजिम गरी राख्ने गर्नू ।

सवारी हाँक्नेकै गल्तीबाट ज्यान मर्न अङ्ग भङ्ग घा चोट पर्न गए मर्ने जस्तो शंका देखिए सवारी हाँक्नेलाई अैनबमोजिम गरी राख्ने गर्नू ------------------ १

सरजमीन तहकिकात भै आएको वा बुझिएका २।४ प्रमाणबाट सवारी हाँक्नेको गल्तीबाट भएको नदेखी वा चोट लगाइमाग्नेकै गल्तीबाट किची घा चोट पर्न गएको देखिए हाजिर जमानी दिए तारीखमा र हाजीर जमानी दिन नसके फैसला नभएसम्म खालि हीरासतमा थुनी बुझिएको २।४ प्रमाणबाट सवारी हाँक्नेकै गल्तीबाट घा चोट पर्न गएको देखिन आएमा १ दफाबमोजिम गर्नू ----------------------------------- २

१५ नं. ।। ।। सवारी हाँकी चलाउँदा वर्ष १ मा सवारी राख्न झिकाउनलाई इजाजत भै गएको यति यो यो सवारी लगत दर्ता भएको छ सवारीबाट मानिस पशु मरे घाचोट परे देवालय पुल माल घरहरू नोक्सान पर्न गए रूलबर्खिलाप गरेमा सजाय भएको यति छ भनी हरएक साल सालतमाम भएका मितिले ३५ दिन भित्र सदरको जति पु. गोश्वाराले र मोफसलका जति जिल्ला गौंडा. गोश्वाराले सदर पुलिस गोश्वाराका तालुकवाला मार्फत जाहेर गर्ने गर्नू ।

इति सम्वत् २००३ साल फागुन २१ गते रोज ३ शुभम्